जगद्गुरु शंकराचार्यद्वारा विरचित

# तत्त्वबोध



## ज्ञानदर्पण

(नेपाली पद्यात्मक व्याख्या)

व्याख्याकारः
विष्णुगोपाल रिसाल

जगद्गुरु शंकराचार्यद्वारा विरचित

# तत्त्वबोध



## ज्ञानदर्पण

(नेपाली पद्यात्मक व्याख्या

व्याख्याकार:

विष्णुगोपाल रिसाल

प्रकाशिका:
श्रीमती प्रमिला रिसाल
क ४/७९ विप्रकुटी
जाउलाखेल, ललितपुर
नेपाल।
फोन नं. ५-५३८४११

पहिलो संस्करण: सं. २०५१ साल (१,००० प्रति)
दोस्रो संस्करण: सं. २०६२ साल (५०० प्रति)



मूल्य : रू. ५०।-

मुद्रक:
त्रिवेणी छापाखाना
वागडोल, ललितपुर
फोन नं. ५-५२०४६२

Tattwabodha - Gyanadarpan
- *Bishnu Gopal Risal*

# विषय-सूची

# माल्यार्पण

जन्मेर यो सुन्दर विश्वमाहाँ,
देखी चमक् झिलिमल चौदिशामा ।
साना कुराको सुखले भुलेर,
कैयौं जुनी पार उता गरेर ॥ १ ॥

यो जुन्किरीको पिंध झैं जवानी,
बुढ्याइँ वा बाल्यपना नजानी ।
भुल्छौं अझै यो भवमा भने त,
साच्चै हुनेछौं मृग झैं उदेक ॥ २ ॥

सन्तान सम्पत्ति र मान धाक,
सधैं छ खोजी त्यसकै छ ताक ।
तृष्णा नमेटी मन वासनामा,
टाँस्सीरहे बित्छ जुगौं जमाना ॥ ३ ॥

तृष्णा नदी पार छ गर्न गारो,
डोऱ्याउने नाविक मिल्न गारो ।
डुंगा छ अर्ती उपदेश शास्त्र,
सत्संगको लागि बनेर पात्र ॥ ४ ॥

जो गर्छ यात्रा अनि नित्यताको,
यद्वा छ त्यो वस्तु अनित्यताको ।
खुल्नेछ सद्बुद्धि विवेकसाथ,
त्यो व्यक्तिले गर्दछ बाजिमाथ ॥ ५ ॥

संसार हो यो विष झैँ फुलेको,
सारै मिठो लागु पदार्थ झैँ यो ।
जस्ले बसाल्यो लत तान्छ टप्प,
जो बुझ्छ उम्कन्छ अहा ! सरक्क ॥ ६ ॥

बाधा अनेकौं लतका छिनाली,
निर्लिप्त भै सत्य कुरा अँगाली ।
क्यै छैन मेरो म रहेछु एक,
त्यै हो परंतत्त्व भनी विवेक ॥ ७ ॥

जो गर्छ यस्तो दृढ 'तत्त्वबोध',
त्यस्ता महासाधकको छ खोज ।
यो ग्रन्थ 'माल्यार्पण' गर्न झुक्छ,
सन्तोष मिल्नेछ यथार्थ पुग्छ ॥ ८ ॥



# सम्मति

जगद्गुरु आचार्य शङ्करद्वारा लिखित यो 'तत्त्वबोध' ग्रन्थ वेदान्तदर्शन बुझ्न चाहने सबै जिज्ञासुका लागि उपादेय छ । यो ग्रन्थ सानो नै भएपनि यसमा वेदान्तदर्शनका प्रशस्त पदार्थहरु संगृहीत छन्, परिभाषित छन् । यो ग्रन्थ वेदान्तप्रासादमा पस्ने द्वार हो । यस्तो सर्वजनोपयोगी ग्रन्थको राष्ट्रभाषा नेपालीमा अनुवाद तथा 'ज्ञान-दर्पण' व्याख्या गरेर विद्वान् लेखक विष्णुगोपाल रिसालज्यूले ठूलो पुण्यको काम गर्नुभएको छ । गद्य एवं पद्य दुवैमा प्रस्तुत यो ग्रन्थ सबैको लागि उपयोगी हुनेछ । यसबाट जिज्ञासु जनले अवश्य लाभ उठाउनेछन् । यो ग्रन्थ चाँडै प्रकाशित हुनेछ । यसको राम्रो प्रचार हुनेछ भन्ने कुरामा म विश्वस्त छु र लेखकलाई सम्मति प्रदान गर्दछु । यसका लागि भगवान् श्री पशुपतिनाथसँग हृदयत: प्रार्थना गर्दछु ।

**२०५१ कार्तिकी पूर्णिमा**

**डा. स्वामी रामानन्दगिरि**
**महेश संन्यास आश्रम**
**देवघाट, चित्तौन ।**

# प्रसन्नता

भवसागर पार जानका लागि मुमुक्षुजन ब्रह्म चिन्तन गर्छन् । परन्तु ब्रह्मचिन्तक मुमुक्षु विरलै हुन्छन् । भवसागरमा बसेर भवसागर चिन्तकको संख्या धेरै छन् । काम, क्रोध, लोभ, मोह, मात्सर्य प्रधान भावले सत्य र अनृत मिलेर यो परिदृश्यमान संसार बनेको हो तापनि सत्यांशको प्राप्तिको लागि अंनृतांश अर्थात् असत्यांशको विचार गर्नु उति नै आवश्यक हुन्छ । त्यसै प्रसङ्गलाई आद्यजगद्गुरु शङ्कराचार्यजीले ब्रह्मसूत्र शाङ्करभाष्यको भूमिका अध्यास निरुपण प्रकरणमा 'सत्यानृते मिथुनीकृते...., आदि शब्दले प्रष्ट पार्नुभएको छ । अझ अगाडि बढेर 'स्मृतिरुपः परत्र पूर्वदृष्टावभासोऽध्यासः' भनेर अध्यासको स्वरुप बताउनु भएको छ । संक्षेपमा भन्नु पर्दा 'अतस्मिन् तद्बुद्धिः' शब्दले लक्षणद्वयको आश्रय लिएर यो सम्पूर्ण परिदृश्यमान प्रपञ्च अध्यासमूलक छ भन्नु भयो । हो पनि, व्यावहारिक दशामा सम्पूर्ण वस्तु सत्य जस्तै देखिए तापनि पारमार्थिक दशामा ती सबै बाधिक हुन्छन् । यो परमार्थ सत्य हो ।

यसै परमार्थ सत्यको खोजीको लागि सच्छास्त्रहरुको अध्ययन सद्गुरुको शरणमा गएर गर्नुपर्छ । साथै परमार्थ वस्तु आत्मा वा ब्रह्म तत्त्वलाई बुझ्नका लागि श्रवण, मनन, निदिध्यासन गर्नु पनि उत्ति नै आवश्यक हुन्छ । श्रवण र मनन आदिको लागि सत्सङ्गको ठूलो भूमिका छ । अनेक जन्मको संस्कार उब्दुद्ध भए पछि मात्र सत्सङ्ग र सद्गुरु प्राप्ति हुन्छ । त्यसपछि आधिकारिक रुपले मुमुक्षुत्व प्राप्त

हुन्छ । त्यसपछि आधिकारिक रूपले मुमुक्षुत्व प्राप्त गर्छ र 'ब्रह्मविद् ब्रह्मैव भवति' श्रुतिको अनुसार ब्रह्मवेत्ता ब्रह्म नै हुन्छ ।

परन्तु प्रारम्भिक अवस्थामा 'तत्त्वमसि' आदि महावाक्यहरूको यथार्थरूपमा अनुगमन गर्नै पर्छ । अतः सर्वसाधारण मुमुक्षुजनको लागि जगद्‌गुरू शङ्कराचार्यजीले 'तत्त्वबोध' नामक पुस्तकद्वारा श्रवण मनन निदिध्यासनार्थ ठूलो उपचार गर्नु भएको छ । तर यो पुस्तिका संस्कृत भाषामा भएको हुनाले सर्वसाधारण जिज्ञासुले बुझ्न सक्दैन । त्यसो भएको हुनाले स्व. पं. जयदेव पौडेलले सरल नेपाली भाषामा अनुवाद गर्नुभयो, तर त्यही पनि दुर्लभ र कठिन हुन थाल्यो ।

यसै कठिनाईलाई ध्यानमा राखेर श्रीविष्णुगोपाल रिसालजीले अत्यन्त सरल र सुगम 'ज्ञान-दर्पण' व्याख्या सहितको पद्यानुवाद गरेर जिज्ञासुजनको ठूलो उपकार गर्नु भएको छ । श्री रिसालजीले मूलको पद्यानुवाद तथा कतै कतै पं. जयदेवजीको अनुवादको पनि स्पष्टीकरण गरेर राख्नुभएको छ । विशेष रिसालजीले सरल सुबोध पद्यानुवाद गर्नु भएकोमा म अत्यन्त प्रसन्न छु । यस्तै जिज्ञासु महानुभावहरू पनि प्रसन्नै हुनु हुनेछ भन्ने विश्वासमा छु । यसको उत्तरोत्तर प्रगतिको कामना गर्दै लेखनीलाई यहीं विराम दिन्छु ।

'हितं मनोहारि च दुर्लभं वचः'

**पौष ५, २०५१**

**डा.स्वामी प्रपन्नाचार्य**
**मृगस्थली, देवपाटन,**
**काठमाडौं ।**

# मेरो भन्नु

'तत्त्वबोध' नामक ग्रन्थ जगद्गुरू श्री शंकराचार्यबाट रचना गरिएको हो । यसमा शुरूदेखि नै शरीर के हो ? मन के हो ? ईश्वर के हो हाम्रो प्रारब्ध भनेको के हो ? इन्द्रिय भनेका के हुन् जस्ता अनेकौं प्रश्नहरू सर्वसाधरण बालकदेखि बूढासम्मको जीवनभर खट्किंदै रहन्छन् । यस्ता प्रश्नहरूको तात्त्विक ढङ्गले उत्तर दिने क्रममा चालीसओटा प्रश्नहरू यहाँ समावेश गरिएका छन् । ती प्रश्नहरूको साथै यस्तै अरू प्रासंगिक तत्त्वहरूलाई पनि केलाई केलाई सम्पूर्णको परिचय गराइएको छ । यसरी हामी सबै वर्गको आध्यात्मिक दृष्टिमा सदा ढाकिरहने अज्ञानरूपी बाहिरी जालोलाई यो सानो ग्रन्थले विस्तारै उघारिदिन्छ र आध्यात्मिक जगत्मा पस्ने ढोका खोलिदिन्छ ।

सानो भए पनि यस्तो महत्त्वपूर्ण ग्रन्थको बोध नेपालीहरूलाई पनि होओस् भन्नाको लागि बाबु माधवप्रसाद शर्माद्वारा दूध विनायक, वाराणसीबाट नेपाली भाषानुवाद सहितको ग्रन्थ धेरै नै अगाडिदेखि प्राप्त भैरहेको थियो । तर पनि सर्वसाधारण स्त्री-पुरूषहरूले पनि सरल तरीकाले बुझ्री हृदयंगम गर्न सकून् भन्ने विचारले सुबोधिनी भाषा टीका र तालिका सहितको 'तत्त्वबोध' राष्ट्रभाषा नेपालीमा तयार गरी पं. जयदेव पौडयालद्वारा तेस्रो संस्करणसम्म प्रकाशनमा ल्याइएको थियो । त्यसै ग्रन्थलाई संस्कृतको मूल हटाई नेपाली भाषामा मात्र छपाएर श्री ५ को सरकार, सञ्चार मन्त्रालय, मुद्रण तथा प्रकाशन विभागद्वारा तेस्रो संस्करणसम्म

प्रकाशन गरी वितरण पनि गरियो । मुमुक्षु जनको बुद्धिले गर्दा अझै पनि उक्त ग्रन्थको अभाव खट्किँदै गैरहेछ ।

यसरी एकातिर पुस्तकको अभाव त छ छ, फेरि जनतामा यस किसिमको विषय वस्तु जान्न बुझ्न सक्ने क्षमतामा कमी समेत देखिएकोले पनि अझ स्पष्ट र बुझिने गरी व्याख्या गर्नुपरेको पनि छ । यिनै कुरालाई ध्यानमा राखेर अनुष्टुप छन्दमा पद्यात्मक व्याख्या गरी यो किताबलाई प्रकाशनमा ल्याउने प्रयास गरेको हुँ । गुरूका पनि गुरू जगद्गुरूलाई सदा सम्झना राख्नको लागि उहाँको रचना संस्कृत मूललाई ग्रन्थमा सरसता बढाउनको लागि यथावत् अगाडि राखेर नेपाली गद्यमा सरल अनुवाद् पनि गरिएको छ । उक्त अनुवादले पं. जयदेव गुरूलाई पनि सम्झना गराई राख्दछ । संस्कृत मूल पछि पद्यात्मक व्याख्या **ज्ञानदर्पण**लाई राखेको भएपनि हुने थियो । अनि त्यसपछि मात्र सरल नेपाली अनुवाद राखेको भएपनि ग्रन्थमा बाधा पर्ने त थिएन । मूलपछि तत्काले लेखकले देखाउन खोजेको व्याख्या ज्ञानदर्पण अघाडि आउने थियो । तर यसो गर्दा पद्य पढ्नमा रूची नहुने पाठकलाई गद्य पत्तो लगाउन तलतिर खोज्नु पर्ने झन्झट एकातिर हुन्थ्यो भने अर्कोतिर त्यो गद्य अनुवाद पद्यको सारांशजस्तो मात्र हुन जाने डर पनि थियो । अतः यी कुराहरूको समाधानका लागि नै संस्कृत मूलपछि गद्य अनुवाद अनि पछि मात्र ज्ञानदर्पण राखिएको हो । लेखकको यो मनसाय बुझेर प्रस्तुत गरिएको क्रमानुसार पाठकवृन्दले गहिरो अध्ययन गरिदिनु भै रूचीपूर्वक यथायोग्य सल्लाह सुझाव दिनुभएमा अर्को संस्करणमा समावेश गर्न पाउने थिएँ यसमा लेखक कृतज्ञ नै रहनेछ ।

यसमा उल्लेख भएका विषयहरूको व्याख्या गर्ने हो भने एकेक विषयको एकौटा सिङ्गै ग्रन्थ पनि बन्न सक्दछन् । अत : सोही कुराको विचार गरी किताबको आकार धेरै ठूलो नहोस् तर विषयको परिचय भने मिलोस् भन्ने अभिप्रायले पनि कति विषयको व्याख्या केबल एक श्लोकमै सीमित गरिएको पनि छ । त्यसो हुँदा पाठकहरूलाई यदाकदा खट्किने असुविधाको लागि लेखक क्षमा प्रार्थी छ ।

शांकरवेदान्तका गुरू श्री शंकराचार्यद्वारा लिखित यो ग्रन्थ मुमुक्षुको लागि वेदान्तको खासगरी तत्त्वको वर्णन गर्दा मुख्यत: चौवीस तत्त्व नै पर्दछन् । यी तत्त्वहरूको चर्चा श्रीमद्भागवत महापुराणको दुई ठाउँमा स्पष्ट पाइन्छ । प्रथमत: तृतीय स्कन्धको छब्बीसौं अध्यायमा भगवान् कपिलदेवले आमा देवहुतीलाई बताउनुभएको छ ।

**यत्तन्त्रिगुणमव्यक्तं नित्यं सद सदात्मकम् ।**
**प्रधानं प्रकृतिं प्राहुरविशेषं विशेषवत् ।।१०।।**
**पञ्चभिः पञ्चभिब्रह्म चतुर्भिर्दशभिस्तथा ।**
**एतच्चतुर्विंशतिकं गणं प्राधानिकं विदुः ।।११।।**
**महाभूतानि पञ्चैव भुरापोऽग्निर्मरून्नभः ।**
**तन्मात्राणि च तावन्ति गन्धादीनि मतानि मे ।।१२।।**
**इन्द्रियाणि दश श्रोतं त्वग्दृग्रसननासिकाः ।**
**पाक्करौ चरणौ मेढ्रं पायुर्दशम उच्यते ।।१३।।**

यसैगरी एकादशस्कन्धको वाइसौं अध्यायको चौधदेखि सोह्रौं श्लोकसम्ममा भगवान् श्रीकृष्णद्वारा भक्त उद्धवलाई पनि यिनै कुरा बताउनु भएको छ ।

यसै गरी समस्त सृष्टिको वर्णन गर्दै उपनिषद्हरूमा यी सबै तत्त्वको विस्तृत चर्चा गरिएको पाइन्छ । साथै पञ्चीकरणको प्रकृया पनि बताइएको छ । कति ठाउँमा पञ्चकोशको बेग्लै वर्णन छ । समष्टि रूपमा हेर्दा 'तत्त्वबोध' मा बताइए जस्तो विस्तृत चर्चा 'पैङ्गलोपनिषद्', 'शारीरकोपनिषद्' आदिमा गरिएको पाइन्छ ।

मुमुक्षुले तत्त्वबोध गर्न सक्यो भने मात्र चाँडो मोक्ष प्राप्त गर्न सक्दछ । यसैले गर्दा तत्त्वको बोध होओस् भनी हाम्रा पूर्वज ऋषिमुनिहरूले परापूर्वकालदेखि त्यसको विस्तृत खोज गरेर अनन्त कालसम्म रहने शाश्वत् सत्यलाई स्पष्ट देखाइदिनुभएको छ । त्यस कुरालाई हामीले पठन-पाठन श्रवण-मननद्वारा जति सक्यो चाँडो हाशील गरी आफ्नो यो नरचोलाको सदुपयोग गर्नुपरेको छ । यसैकारणले विभिन्न ग्रन्थहरूमा बताइएको उक्त कुरालाई ज्ञानदर्पणद्वारा मुमुक्षु वर्गमा बोध गराउने धृष्टतासम्म गरेको हुँ । यो सानो ग्रन्थले मुमुक्षुजनलाई कतिसम्म लाभ पुऱ्याउन सक्छ त्यो त भविष्यले नै बताउला । तर पनि यस क्षेत्रका महानुभावहरूले यसलाई मजस्ता सिकारूले जानीनजानी बनाएको पापा सम्झी मीठो रसीलो मात्र खाई अरू नमीठो भागलाई औंल्याइदिनु भए यथाशक्य सुधार गर्दै जाने थिएँ । किनभने -

**"अहो ज्ञानमहो ज्ञानमहो सुखमहो सुखम्**
**अहो शास्त्रमहो शास्त्रमहो गुरुरहो गुरुः ।।"**

ज्ञान भन्ने कुरा, सुख भन्ने कुरा त्यस्तै शास्त्र र गुरू भन्ने कुरा सामान्य होइनन् । तिनको प्राप्ति गर्नु ठूलो भाग्यको कुरा हो । कोटियौं जन्मको पुण्यले मात्र पाइन्छ । त्यो प्रकृया भित्र लेखक पनि परेकै छ ।

धन्य हो, यो सानो ग्रन्थमा प्रस्तुत गरिएको 'ज्ञानदर्पण'लाई अझ सफा हुने गरी युक्तिसंमत 'सम्मत्ति' दिनुभै म प्रति कृपा गरिदिनु भएकोमा वेदान्तका प्रकाण्ड विद्वान् डा. स्वामी श्री रामानन्द गिरिज्यूमा त्यस्तै 'प्रसन्नता' व्यक्त गरी यस ग्रन्थको बारेमा आफ्नो उद्गार पोखी लेखकको उत्साह बढाइदिनु भएकोमा डा.स्वामी प्रपन्नाचार्यमा सहश्रस: कृतज्ञता ज्ञापन गर्दछु ।

यसै गरी यस ग्रन्थको विषयमा टुक्राटुक्री सुनी यसको प्रकाशनमा आल्हादित भै सल्लाह सुझाव दिनु हुने वेदान्त प्रवक्ता स्व. हरिहरानन्दज्यूमा पनि आभार व्यक्त गर्दछु । त्यसै गरी यसलाई प्रकाशन गर्ने कुरामा प्रेरणा दिनु हुने सत्सङ्ग परिवारका वेदान्त प्रवक्ता पं. विष्णुप्रसाद न्यौपानेज्यूमा तथा वारम्बार वेदान्तका प्रवचनले यस प्रकारको कार्यमा प्रवृत्त गर्नुहुने पं.श्यामप्रसाद पौडेलज्यूमा पनि आभार व्यक्त गर्दछु ।

साथै यसको प्रकाशनार्थ सहयोग गर्ने प्रकाशिका श्रीमती प्रमिला रिसाललाई मुरीमुरी धन्यवाद दिन्छु । अनि छपाई सम्बन्धी कार्यमा सहयोग गर्ने ललिता प्रिन्टर्सका कर्मचारीवर्गमा पनि यथायोग्य साधुवाद् व्यक्त गर्दछु ।

हरि ॐ तत्सत् !


**विष्णुगोपाल रिसाल**
**क ४/७८ विप्रकुटी**
**जाउलाखेल, ललितपुर**
**फोन नं. ५२१४११**


दिनाङ्क :-
सम्बत् २०५१ साल माघ शुक्ल पञ्चमी (श्रीपञ्चमी)

# दोस्रो संस्करणमा मेरो विचार

"तत्त्वबोध" नामक यो सानो ग्रन्थको मूल संस्कृतमा भएकोले सर्वसाधारण नेपालीलाई बुझ्न बुझाउनको लागि स्व. जयदेव पौडेलज्यूद्वारा नेपाली गद्यमा अनुवाद गरी कहीं व्याख्या पनि गर्नुभएकोमा तत्काल सो ग्रन्थको अभाव हुन गै सोको सहयोगार्थ मैले गद्यमा र **"ज्ञानदर्पण"** नामक नेपाली पद्यात्मक व्याख्या समेत गरी विगत वि.सं. २०५१ सालमा प्रकाशन गरेको थिएँ ।

शंकर वेदान्तमा रूची हुने जोसुकैको लागि प्रारम्भिक विषय-तत्त्वको वर्णन तथा जानकारी दिइएको शब्दावलीको व्याख्या भएकोले आज १२ वर्षको अन्तरालमा बजारमा यस ग्रन्थको माग देखिन आएको हुँदा पुनः दोस्रो प्रकाशन हुन लागेको छ ।

पहिलो संस्करणमा पाइएका सानातिना त्रुटीहरूलाई हटाई विषयप्रति अझ स्पष्ट बोध हओस् भनी केही तालिकाहरू प्रस्तुत गरिएका छन् । ती तालिकाहरू बुझ्न कठिन नदेखिएकाले तिनको व्याख्या भने गरिएको छैन । बरू विषयवस्तुहरूको संझना गर्न ती तालिकाहरूले विशेष सहयोग नै गर्नेछन् भन्ने संझेको छु । यदाकदा कहीं त्रुटी हुन गएमा क्षमा प्रार्थी छु र पाठकहरूले कतै उल्लेख गरिदिनु भएमा पछि शुद्धिकरण गरिने नै छ । वेदान्त

विषयको अध्ययन अध्यापन गर्ने परिपाटी अझ बसोस् जसले गर्दा देशमा आध्यात्मिक भावनामा वृद्धि होस् र चाडै नै अर्को संस्करण छाप्ने माग भै आओस् भन्ने अभिप्राय व्यक्त गर्दै भावी पिंडीले यसमा रूची लेओस् भन्ने पनि प्रार्थना गर्दछु ।

मिति: २०६२ आषाढ

विष्णुगोपाल रिसाल
क ४/७८ विप्रकुटी
जाउलाखेल, ललितपुर-४

# प्रस्तावना

असार संसार छ दूर पार,
नपाइँदा पार हुने निसार ।
सधैं भयो जिन्दगी व्यर्थ वार,
पुगे उता पार हुनेछ सार ॥ १ ॥

अमूल्य चोला नरजन्म भन्दै-
बताउँछन् शास्त्र निचोड गर्दै ।
नचाहिंदो गन्थन छोडि, 'तत्त्व'
बुझेर सन्मार्ग समाति झट्ट ॥ २ ॥

बिते करोडौं जुनी के भएर ?
किरा फटचांग्रा पशुपक्षि धेर ।
मनुष्य - चोला कुन कामको छ ?
बुझौं बुझाऔं गरि 'तत्त्वबोध' ॥ ३ ॥

समाति सच्चा गुरु - पाउ झट्ट,
विधानले चल्नु छ शास्त्रयुक्त ।
शरीर संसार असार भन्छन्,
अनेकका दुःख र शोक बन्धन् ॥ ४ ॥

भनौं कसोरी किन सुख्ख छैन ?
कहाँ छ त्यो लौ किन भेटिंदैन ?
शरीर संसार असार हो त ?
छ सार केमा कसरी लिने त ? ॥ ५ ॥

शरीरका इन्द्रिय प्राण आदि,
कहाँ रहन्छन् कुन कामका ती ?
भनेर एकेक चुनेर तत्त्व,
यथार्थको बोध हओस झट्ट ॥ ६ ॥

अनन्त छन् वस्तु अनेक भाँती,
भईसके पारख जाँजीजाँची ।
नजानदा हुन्न प्रयोग जाती,
भएपछि ज्ञान हुनेछ जाती ॥ ७ ॥

अनेक सांसारिक वस्तु तत्त्व,
चुनेर चूरो चिनिए सरक्क ।
गरेर पक्का त्यसमै अडे त-
'मुमुक्षु' ले पाउँछ 'तत्त्वबोध' ॥ ८ ॥

जन्मेदेखि मरुञ्जेल, दुःख देखेर विश्वमा ।
मोक्षको चाहना गर्ने, घुम्छ फन्फनी विश्वमा ॥ ९ ॥

साथी भाइ र संगाति घरका परिवार ती
शान्तिका नभई साथी, हुनेछन् भार मात्र ती ॥ १० ॥

जति होस् धन सम्पत्ति, पढाइ मान इज्जत ।
देह होस् स्वस्थ क्या राम्रो ! नभए चैन त्योसित ॥११॥

मनमा उठ्छ वैराग्य, के गरी शान्ति पाउने ?
कुन ठाउँ गई मिल्छ ? कसको मार्ग धाउने ? १२ ॥

धेरै छन् मार्गका गल्ली, जिन्दगी बिच्छ हल्लिंदै ।
राम्रो पाउन त्यो गल्ली, भाग्यैले मात्र मिल्छ है ! १३॥

धाउनै पर्छ खोज्नेले, सत्य कल्याण सुन्दर ।
आखिर मिल्छ त्यो तत्त्व, लागे पछि निरन्तर ॥ १४ ॥

मठ मन्दिर वा घाट, एकान्त पाटी सत्तल
तीर्थस्थानविषे मिल्छ, मनमा शान्ति निश्चल ॥ १५ ॥

साधु सन्त र सन्यासी, ब्रह्मवेत्ता छ जो जन !
गरी निर्णय आफैंले, गुरु थापोस् निरञ्जन ॥ १६ ॥

गरेर शास्त्रमा श्रद्धा, गुरुको पाउमा परी ।
तत्त्वको खोज गर्नेले, प्रश्न सोधोस् सुधा गरी ॥ १७ ॥

नम्र भै जान्न खोजेका, कुरालाई चुनी चुनी ।
एकेक क्रमले सोधोस्, हुन्छ त्यो ज्ञानको धनी ॥१८॥

प्रश्न गर्ने निकै हुन्छन्, तर कस्तो मुमुक्षु हो ?
प्रश्नको भाव भाषाले, गुरुबाट छुटिन्छ त्यो ॥ १९ ॥

जहाँ छ सत्यको खोजी, हुन्छ सत्संग जंघट ।
सबै हुन्नन् मुमुक्षु ती, देखिन्छन् भद्र पंडित ॥ २० ॥

प्रश्नको कोश बोकेका, कुनै शंका-विशारद
कुनै ठट्यौलाउनै तत्पर, भडुँवा मूर्ख पामर ॥ २१ ॥

कुनै बोल्न नजानेरै, प्रश्न बेढंग बोल्दिने ।
कुनै एक हुने पक्का, प्रश्नले तत्त्व खोल्दिने ॥२२॥

साँच्चै त्यो तत्त्वको खोजी, गर्ने जो नम्रता लिई ।
बोल्छ मीठो स्वभावैले, सबैमा मुग्धता दिई ॥ २३ ॥

मुमुक्षु छ भने मात्र, शोभा हुन्छ सभाबिच ।
तत्त्वको खुल्छ गूढार्थ, सबैले पाउँछन् सुख ॥ २४ ॥

मुमुक्षु कुन हो त्यस्तो ? कस्ता प्रश्न खडा गरी ?
गुरुलाई पगालेर, सन्तुष्टि मिल्छ के गरी ? २५॥

उघारी तत्त्वको खोल, गरौं बोध क्रमैसँग ।
धैर्यसाथ दिई ध्यान, संहालौं ज्ञानको धन ॥ २६ ॥

चारै साधनले युक्त, गरी प्रश्न अनेकन ।
गुरुको पाउमा पर्म्रौं, श्रद्धायुक्त भईकन ॥ २७ ॥

श्री गुरु शंकराचार्य, द्वारा निर्मित पुस्तक ।
साथै छ मूलको रूप, 'तत्त्वबोध' पुरापुर ॥ २८ ॥

त्यहाँ छ प्रश्न वा उत्तर, जे जस्तो हो यथार्थतः ।
केलाऔं त्यसमै कल्याण, हाम्रो छ, छैन, शंसय ॥२९॥

सरलार्थ छ गद्यैमा, मूलचाहिँ यथास्थिति ।
जहाँ जे स्पष्टता हुन्न, स्पष्ट गर्ने यथामति ॥ ३० ॥

गुरुबाट हुने नै छ, व्याख्या विस्तृत निर्मल ।
भाषा बोली र दृष्टान्त, मिलाई पारि झल्मल ॥३१॥

ज्ञानको द्वार खोलेर, भित्र तानेर भक्तको ।
गर्ने उद्धार हुन् गुरु, उनैको छ कृपा ठूलो ॥ ३२ ॥

जयदेव गुरुबाट, भाषामा लेखि पुस्तक ।
'सत्संग परिवारै' ले, पाएर त्यसको रस ॥ ३३ ॥

ज्ञानको खोजमा दौडी, गर्दछु गुरुकै स्मृति ।
उहाँकै आड पाएर, भयो प्रस्तुत यो कृति ॥ ३४ ॥

गुरु हुन् कुलका तारा नाथ ती विश्वका पनि ।
जानी जनक गर्दोछु, वन्दना पाउमा परी ॥ ३५ ॥

म तत्त्वको खोजी गरी जनंभरी,
घुमी मिलेका कण खोपडी भरी ।
रचेर पद्यात्मक 'ज्ञान-दर्पण',
विनम्रतापूर्वक गर्छु अर्पण ॥ ३६ ॥



# तत्त्वबोध

## गुरुवन्दना

वासुदेवेन्द्रयोगीन्द्रं नत्वा ज्ञानप्रदं गुरूम् ।
मुमुक्षूणां हितार्थाय तत्त्वबोधोऽभिधीयते ।।

वासुदेवेन्द्र नाम गरेका महायोगी ज्ञानदाता गुरुज्यूलाई डण्डवत् प्रणाम गरेर जन्ममरणको बन्धनबाट छुट्न चाहने व्यक्तिहरूको हित होओस् भनी तत्त्वबोध नाम गरेको यो पुस्तकको रचना गर्दछु ।

**ज्ञानदर्पण**

गुरु हुन् ज्ञानका दाता, साँचो मार्ग बताउने ।
हित गर्ने मुमुक्षुको, शंका जम्मै हटाउने ।।
१

त्यस्ता ती ब्रह्मका ज्ञानी, वासुदेव गुरुकन ।
गरी प्रणाम भन्दैछु, 'तत्त्वबोध' सबैकन ।।
२

यसले गर्छ कल्याण, जो श्रद्धासाथ लाग्दछ ।
सुन्छ वा पढ्छ आफैंले, यद्वा तत्त्व सुनाउँछ ।।
३

भव बन्धन जानेर, मोक्षको चाहना हुने ।
वैरागी भक्तका लागि, राम वाण सरी हुने ।।
४

नगरी तत्त्वको बोध, कसरी ज्ञान फुर्दछ ?
गरूँ त्यो तत्त्वको बोध, भनी जो चाह गर्दछ ।।
५

त्यस्ताले गुरुको पाउ, पक्रेर भक्ति पूर्वक
तत्त्वको बोध गर्नेछ, गुरु छन् तत्त्व बोधक ।।
६

गुरु ब्रम्हा गुरु विष्णु, गुरु शंकर तारक ।
गुरु नै नेत्रका ज्योति, गुरु सम्पूर्ण साधक ।।
७

यसरी पूर्ण श्रद्धाले, गुरुको पाउमा परोस ।
त्यसको हुन्छ उद्धार, शंका कत्ति पनि नहोस् ।।
८

## चारसाधन

साधनचतुष्टयसम्पन्नाधिकारिणां मोक्षसाधनभूतं तत्त्वविवेकप्रकारं वक्ष्यामः

चारै साधनका अधिकारी भएका व्यक्तिहरूको निमित्त मोक्षको साधन भएको यो 'तत्त्वबोध' लाई विचार पूर्वक यसरी केलाउने भनी त्यसको प्रकृया बताउँछु ।

**ज्ञानदर्पण**

चार साधनले युक्त, अधिकारी छ जो जन ।
त्यस्ताको मोक्षकै लागि, हुने सम्पन्न साधन ।।

९

तत्त्वबोध छ प्रत्यक्ष, कसरी हो त यो भनी ।
एकेक प्रश्न केलाई, क्रमबद्ध छ थालनी ।।

१०

के के छ मोक्षको लागि, चाहिने सब साधन ।
तिनको गुण औ तत्त्व, सबैको छ विवेचन ।।

११

कुन तत्त्व मिली जीव, कसरी सृष्टि चल्दछ ।
प्राण इन्द्रिय वा रूप, के गरी बन्न थाल्दछ ?

१२

शरीर अनि आत्माको, भव जीव र ईश्वर ।
विभिन्न तत्त्वले गर्दा, के छ संबन्ध आखिर ?

१३

इत्यादि तत्त्वको लेखा, क्रमैले हुन्छ वर्णन ।
मुमुक्षु शान्त भै लागौं, श्रद्धायुक्त भईकन ।।

प्र. साधन चतुष्टयं किं ?

उ. (क) नित्याऽनित्यवस्तुविवेकः
(ख) इहामुत्रार्थ फलभोग विरागः
(ग) शमदमादिषट्सम्पत्तिः
(घ) मुमुक्षुत्वं चेति

प्र. चार साधन भनेका के के हुन् ?

उ. (क) यो वस्तु नित्य हो र यो अनित्य हो भन्ने विचारपूर्वकको निर्णय हुनु,
(ख) यस लोक र परलोकमा कर्मफल भोग्ने इच्छा नहुनु,
(ग) शम, दम, आदि नाम गरेका ६ प्रकारका सम्पत्ति हुनु र
(घ) मोक्ष होस् (फेरि जन्मनु नपरोस्) भन्ने इच्छा हुनु ।

**ज्ञानदर्पण**

चार साधन भन्नाले, के के हुन? के छ लक्षण?
त्यसको हुन्छ विस्तार, गरौं छुट्टै निरूपण ।।

जसको नित्यता हुन्छ, तिनै काल त्यो 'नित्य' हो ।
यही विचारमा पक्का, त्यही नै 'सद्‌विवेक' हो ।।
१६

पृथ्वी वा स्वर्गको सुख, कर्मका फल बन्दछन् ।
नराखी तिनको चाह, बस्नु 'वैराग्य' भन्दछन् ।।
१७

शमादि नाममा उग्र, छ ओटा बिघ्न पार भै ।
बस्छ जो धनी त्यै हुन्छ, तिनै सम्पत्ति नाम भै ।।
१८

भव बन्धनको गाँठो, चुँडाली पार पाउन ।
जो छ तत्पर सो व्यक्ति, 'मुमुक्षु' भन्दछन् जन ।।
१९

## क. विवेक

प्र. नित्याऽनित्यवस्तुविवेकः कः ?

उ. नित्यंवस्त्वेकं ब्रह्मः, तद् व्यतिरिक्तं सर्वमनित्यम्
अयमेव नित्याऽनित्यवस्तुविवेकः ।

प्र. नित्य र अनित्य वस्तुको विचार भनेको के हो ?

उ. कहिल्यै पनि नाश नहुने नित्य वस्तु ब्रह्म (आत्मा) मात्र एक छ । त्यसदेखि बाहेक अरू सबै वस्तु नाशवान् छन्, त्यसैले ती सबै अनित्य हुन् । यसैलाई 'नित्यानित्यवस्तुको विचार' भन्दछन् ।

**ज्ञानदर्पण**

जो रहन्छ तिनै काल, त्यही नै 'नित्य' वस्तु हो ।
जसको छैन त्यो चाल, 'अनित्य' त्यही वस्तु हो ।।
२०

शरीर धन सम्पत्ति, रहन्नन् एकनासले ।
जगतै पनि त्यस्तै हो, अनित्यै हो विनासले ।।
२१

साक्षी रूप छ यो आत्मा, तिनै काल सदा हुने ।
त्यसैले नित्य यो वस्तु, स्पष्ट गर्छ विवेकले ।।
२२

## ख. वैराग्य

प्र. इहामुत्रार्थफलभोगविरागः कः ?

उ. इह स्रग्चन्दनवनितादिषु अमुत्र स्वर्गादि भोगेष्विच्छा-राहित्यमेव ।

प्र. यस लोकको र परलोकको फलको (कर्मको) भोगमा विरक्त हुनु भनेको के हो ?

उ. यहाँ माला, चन्दन, स्त्री, आदि भोग्य पदार्थमा इच्छा नराख्नु, त्यस्तै मरेपछि स्वर्ग वा वैकुण्ठको सुखभोग गरुँला भन्ने इच्छा नराख्नु नै 'वैराग्य' भनिन्छ ।

**ज्ञानदर्पण**

सुख साधनले बाँचौं, यहाँमोज गरी गरी ।
मरेपछि स्वर्गमा गै, गरौं सौख अनेक् थरि ।।
२३

स्त्री पुत्र धन औ मान, जसरी हुन्छ खोजने ।
मिले धाक दिने नाना, नमिले कष्ट रोजने ।
२४

धेरै कर्म गरी धर्म, कमाई स्वर्ग रोजने ।
कति त्यस्ता पनि हुन्छन्, पाएसम्म दुवै लिने ।
२५

यस्ता यी चाहना कत्ति, नराखी दूर भैकन ।
मस्तराम स्थिति जो छ, 'वैराग्य' मान्दछन् जन ।।
२६

## ग. षट्सम्पत्ति

प्र. शमादिषट्संपन्तिः का ?

उ. शमदमोपरतिस्त्तितिक्षा श्रद्धा समाधानंचेति ।

प्र. शम आदि गरेका ६ प्रकारका सम्पत्ति के हुन् ?

उ. शम, दम, उपरति, तितिक्षा, श्रद्धा र समाधान नाम गरेका ६ प्रकारका सम्पत्ति छन् ।

**ज्ञानदर्पण**

शम भो दम भो दोटा, त्यस्तै उपरति पछि ।
तितिक्षा अनि श्रद्धा र, समाधान छ सम्पत्ति ।। २७

## (१) शम-अन्तस्करण निग्रह

प्र. शमः कः ?

उ. अन्तरिन्द्रियनिग्रहः

प्र. 'शम' भनेको के हो ?

उ. भित्री इन्द्रिय (मन, बुद्धि, चित्त र अहंकार) लाई रोक्नु नै शम हो ।

मन, बुद्धि, अहंकार, चित्त हुन् भित्री इन्द्रिय ।
यी सबै वशमा राख्नु, सम्पत्ति पहिलो 'शम' ।।
२८

## अन्तस्करण

### मन

मनले गर्छ संकल्प, विकल्प पनि गर्दछ ।
नभमा पूल बाँधेर, अनेकौं सृष्टि गर्दछ ।।
२९

तुरुन्तै जग हालेर, घरको धूरी तुर्दछ ।
भत्काई छिनमै खाडल्, खनेर फेरि पुर्दछ ।।
३०

गर्दै तर्कवितर्कादि, छट्पटी चल्छ बाहिर ।
हातमा शून्य नै लाग्छ, मनको खेल आखिर ।।
३१

धन मान परिवार, सम्पत्ति गर्छ चाहना ।
मिले भैं कल्पना गर्छ, नमिल्दा पर्छ वेदना ।।
३२

यस्ता यी मनका बेग, नरोके जुनी बित्दछ ।
त्यसैले मन रोकेरै, सन्मार्गी बाजी जित्दछ ।।

३३

## बुद्धि

कुन काम कहाँ गर्ने, नगर्ने कुन हो कुरा ?
एकेक गरी छान्विन, बुद्धिले गर्छ सत्कुरा ।।

३४

मनका कल्पनालाई, विवेक साथ संशय
ठिक बेठिक छुट्याई, यथार्थ गर्छ निर्णय ।।

३५

नगरे बुद्धिले काम, मनले तान्छ चौदिशा ।
भुँमरी बिचमा पात, परेभैँ हुन्छ दुर्दशा ।।

३६

बुद्धिले हेर्छ चौतर्फ, परिपञ्च मिलाउँछ ।
मनको बेग रोकेर, मूल बाटो हिंडाउँछ ।।

३७

बुद्धिले नगरेकाम, जगतै हुन्छ जर्जर ।
बुद्धिले गर्छ ता काम, जगतै हुन्छ उर्वर ।।

३८

चित्त

चिताउने चित्त गर्छ, चिन्तनाको चरं चुली ।
नपाई सब ती वस्तु, हुन जान्छ परं दुःखी ।।

३९

चित्तले जे जति गर्छ, बुद्धिसाथ भए जति ।
पर्छ है ! ठाउँमा ठिक्क, नत्र ता हुन्छ दुर्गति ।।

४०

सोचाइ दीर्घ भै जाँदा, गँजडी ताल पर्दछ ।
त्यसैले चिन्तना छोडी, ठोकुवा गर्नुपर्दछ ।।

४१

नसोचे नचिताएमा, पशुको भान पर्दछ ।
गोठाले बुद्धि छाडेर, ठाउँमै अड्नु पर्दछ ।।

४२

होशले न चिताएमा, पुगिन्छ ब्रह्मको घर ।
प्राप्तिको त्यही हो स्थान, मुमुक्षु पुग्छ त्यै पर ।।

४३

# अहंकार

अहंकार र हुंकार, मनुष्य पशु पर्दछ ।
त्यही डंकारले गर्दा, दुःखमा पर्नु पर्दछ ।।
४४

जान्ने सुन्ने म मात्रै हुँ, मेरै चल्दछ हैकम ।
नगरे मान संमान, सबैको तोड्दछु दम ।।
४५

म मात्रै अथवा मेरै, भन्ने भाव रहेतक ।
कसैको गणना हुन्न, क्षय हुन्छ सबै यश ।।
४६

अहंता रहँदासम्म, जीव भाव रहन्छ नै ।
मुमुक्षु पार पाउन्न, अल्भीरन्छ निरर्थ भै ।।
४७

हुंकार जब भो शान्त, अन्तःकरण शान्त भो ।
खुला भो ब्रह्मको द्वार, मुमुक्षु ता प्रशान्त भो ।।
४८

## अन्तःकरण (समष्टि)

मन, वुद्धि, अहंकार, चित्तलाई चिनेर जो ।
सहजै वशमा गर्छ, तत्त्ववेत्ता त्यही न हो ।।
४९

रथका चार घोडा झैं, यी चारैतिर चार्दछन् ।
लगाम नखिचे चारै, रथीलाई लतार्दछन् ।।
५०

त्यसैले ज्ञानको लागि, सम्पत्ति पहिलो भनी ।
मुमुक्षु गर्छ हासिल, 'शम' हो तप-साधनी ।।
५१

'शम' सम्पत्ति पाएर, मुमुक्षु तत्त्व साधक ।
अरू सम्पत्ति भोग्नामा, बन्नेछ दक्ष लायक ।।
५२

## (२) दम-बाह्येन्द्रिय निग्रह

प्र. दमः कः ?
उ. बाह्येन्द्रियनिग्रहः

प्र. 'दम' भनेको के हो ?

उ. बाहिरका इन्द्रियहरू (ज्ञानेन्द्रिय-कान, छाला, आँखा, जिब्रो र नाक, अनि कर्मेन्द्रिय-बोली, हात, गोडा, गुदद्वार र लिङ्ग वा योनी) लाई रोक्नु नै दम हो ।

**ज्ञानदर्पण**

कर्म-ज्ञानेन्द्रिय जंमा, दशौटा बाह्य इन्द्रिय ।
यी सबै वशमा राख्नु, दोस्रो सम्पत्ति हो 'दम'
५३

## ज्ञानेन्द्रिय

कान (शब्द)

कानले जे जति सुन्छ, चर्को वा मधुरो स्वर ।
त्यही नै कहिले मीठो, कहिले हुन्छ कर्कश ।
५४

नसुनी कानले हुन्न, सुनेको गुन्नु पर्दछ ।
शास्त्रसंमत बोलीमा, चुर्लुम्मै डुब्नु पर्दछ ।।
५५

निन्दा र द्वेष बथ्वाइँ, गाली चुक्ली र फोहोर ।
प्रशंसा स्तुतिले गर्दा, मनको हुन्छ हल्चल ।।
५६

साम्यता दुइमा राख्दा, आफू निर्लिप्त बन्दछ ।
नराखे मोक्षको बाटो, रोकिएकै ठहर्दछ ।

५७

संगीत गान सुन्नाले, मृग झैं मर्नु पर्दछ ।
त्यसको लत छोडेर, तटस्थ बस्नु पर्दछ ।।

५८

## छाला (स्पर्श)

तातो चिसो गिलो सारो, छालाले मात्र जान्दछ ।
त्यसको मोहमा पर्दा, हात्ती झैं मर्नुपर्दछ ।।

५९

गर्मी सर्दी सबै बिर्सी, भगवत् चिन्तना गरी ।
मुमुक्षु पार भै जान्छ, भवको सागरै तरी ।।

६०

जाडो र गर्मीले गर्दा, घर कोठा लुगाहरू ।
अनेक बन्दछन्, पुग्छन्, क्षणिक चाहनाहरू ।।

६१

अतृप्त चाहना बढ्दा, राजा रंक सबै दुःखी ।
त्यसको चाहना छोडे, तिनै हुन्छन् अति सुखी ।।

६२

## आँखा (रूप)

आँखाको देख्नु हो धर्म, ऊ देख्छ रूपलाई नै ।
देखेर रूपको रंग, त्यसमै भुल्नु हुन्न है !

६३

रमिता हेर्नको लागि, आँखा नै चुल्बुलाउँछ ।
जो लिन्छ त्यसको मस्ती, धन मान गुमाउँछ ।।

६४

रूपको मोहले गर्दा, बत्तीमा पुतली सरी ।
प्राणको आहुती हुन्छ, जोगिन्छ होशले गरी ।।

६५

त्यसैले रूप पछ्याई, नलाग्ने धीर वीर हो ।
ज्ञानको चाहना गर्ने, सरक्कै पन्छिइन्छ त्यो ।।

६६

## जिब्रो (रस)

स्वाद चाखेर जिब्रोले, रसको गर्छ पारख ।
नजान्ने त्यसमै भुल्छ, जान्ने पाउँछ फारक ।।

६७

माछो फस्छ बल्छिमै ।
रसको लोभले गर्दा ~~भ्रमरो मर्छ फूलमै ।~~
लोभीको गति त्यै बन्छ, निर्लोभी बच्छ स्वस्थ्य भै ।।

६८

पापको बाबु हो लोभ, चिनेर बस्छ जो पर ।
नचिन्ने दुःखमै फस्छ, चिन्ने पाउँछ ईश्वर ।।

६९

## नाक (गन्ध)

नाकले गन्धको चाल, मीठो वा नमिठो कि त ।
गर्छ निश्चय तत्कालै, जो जस्तो मिल्छ त्यो चिज ।।

७०

गन्धको चाल जानेर, पशुपंक्षी चहार्दछन् ।
प्राणको बाजी नै हुन्छ, मर्छन् आफै कि मार्दछन् ।।

७१

भ्रमरो फूलमा फस्दछ,
~~माछो फस्दछ बल्छीमा~~, गन्धको लोभले गरी ।
त्यसैले होश राखेर, बच्नै पर्दछ हरघडी ।।
७२

सुगन्धी धूप वा फूल, अनेक खुस्बु अत्तर ।
विष्ठा रछान दुर्गन्ध, यी सबैबाट भै पर ।।
७३

मुमुक्षु भिन्न भै बस्छ, अज्ञानी फस्छ पामर ।
विवेकले अड्नु पर्छ, शास्त्रले भन्छ आखिर ।।
७४

## कर्मेन्द्रिय

### बोली (वाक्)

ज्ञान इन्द्रियको सेवा, कर्म इन्द्रिय गर्दछ ।
दुवै इन्द्रियमा भित्री, ज्ञान नै भन्नु पर्दछ ।
७५

किनकि ज्ञान भै भित्र, कर्म दौडिन्छ बाहिर ।
अन्तस्करण भन्दा त, दुवै छन् अभ्र बाहिर ।।
७६

कानले जे कुरा सुन्छ, बोलीले दिन्छ उत्तर ।
गुरु झैं ज्ञानले सोध्छ, कर्मले दिन्छ उत्तर ।।
७७

बोली बचन भै स्पष्ट, कर्मको हुन्छ शुद्धता ।
अशुद्ध बोलीले गर्दा, भावमा हुन्छ ब्यग्रता ।।
७८

बोली वचनमा पक्का, ठहर्छ शुद्ध मानव ।
जसको भिन्नता हुन्छ, भन्नै पर्दछ दानव ।।
७९

बोलीले विश्व हाँकिन्छ, बोली गर्छ विनाश त्यो ।
त्यसैले बहुतै थोरै, बोल्ने जो ज्ञानी हुन्छ त्यो ।।
८०

## हात (पाणि)

स्पर्श इन्द्रियको आज्ञा, पाणिले पूर्ण गर्दछ ।
चिसो तातो गिलो सारो, हातैले गर्छ तज्विज ।।
८१

चोरी लूट र संहार, काटमार प्रहारले ।
अरूको गर्छ बिगार, हातको ब्यभिचारले ।।

८२

पूजा र दक्षिणा दान, अनेक उपकारले ।
गर्छ रक्षण हातैले, उदार उपकारले ।।

८३

रक्षा संहार कहाँ के, लिनु वा दिनु पर्दछ ।
हातको दक्षता बोध, ज्ञानीले मात्र गर्दछ ।।

८४

## गोडा (पाद)

इशारा चक्षुको पाई, गोडाले चाल गर्दछ ।
हिंड्नु डुल्नु सिधा काम, गोडाको मान्नु पर्दछ ।।

८५

दिई दुःख अरूलाई, मर्का पार्नु र मार्नुमा ।
यदि चल्दछ गोडा त्यो, पापको पर्छ गर्तमा ।।

८६

जनता राष्ट्रको लागि, तीर्थ मन्दिर धाउने ।
गोडाको उच्च हो काम, सत्य मार्ग सघाउने ।।

८७

कतै जाओस् नजाओस् वा, कल्याणै मात्र गर्छ जो ।
मुमुक्षुको छ अद्भूत, चरित्र जान्न सक्छ को ?

८८

## गुदद्वार (पायु)

गुदद्वार दिसा गर्ने, जान्ने त्यो गन्ध-इन्द्रिय ।
रोकथाम दुवै काम, गर्ने त्यो पायु-इन्द्रिय ।।

८९

खानाको युक्तता बोध, गरी विष्ठा विसर्जन ।
योगयुक्त भई स्वस्थ, बस्छ ज्ञानी अकिञ्चन ।।

९०

## लिंग वा योनी (उपस्थ)

उपस्थबाट जो त्याग, गर्दा आनन्द मिल्दछ ।
त्यसको भोगको इच्छा, छोडेर ज्ञानी झुल्दछ ।।

९१

उपस्थसँगको चाँजो, रस-इन्द्रिय गर्दछ ।
सतर्कता नछोडेरै, ज्ञानीले पार तर्दछ ।।

८२

## इन्द्रियहरू

ज्ञान इन्द्रियका पाँच, कर्मइन्द्रिय साधक
परस्पर मिले ठिक्क, नत्र आफै ती बाधक ।।

८३

इन्द्रिय सब छन् श्रेष्ठ, आ-आफ्ना काम खातिर ।
बिग्रेमा शरीरै हुन्छ, अपाङ्गजन्य आखिर ।।

८४

संरक्षक हुनै पर्छ, एकेक सबको गरी ।
घरको झ्याल ढोका झैं, याद राख्दै घरीघरी ।।

८५

उमेर घर्किंदा अंग, सिथील हुन लाग्दछ ।
रोग वा मृत्युको छेउ, पुगेको भान पर्दछ ।।

८६

नगरे स्यार संभार, शरीर धान्न मुस्किल ।
गरेमा स्यार संभार, सधैं ध्यान त्यतैतिर ।।

९७

कुनै इन्द्रिय कम्जोर, छैनन् ती बलवान छन् ।
सहजै फस्छ जो व्यक्ति, त्यस्ता विषय धेर छन् ।।

९८

एकको पछि लागेमा, अर्को झन् पछि लाग्दछ ।
त्यस्तै गरी सबैमाथि, तृष्णाको भोक जाग्दछ ।।

९९

स्पर्शले चक्षु झस्किन्छ, उपस्थ हुन्छ अस्थिर ।
आ-आफ्नो काममा तत्पर, पाउ बढ्छ त्यतैतिर ।।

१००

रसना लप्लपाएर, पाणिको चाल ताक्दछ ।
कानले शब्दमा ध्यान, दिएर पनि थाक्दछ ।।

१०१

यस्तै गरी ज्ञान कर्म, सहजै जम्जमाउँछन् ।
सबैको गति जानेर ज्ञानी भित्रै अँठयाउँछन् ।।

१०२

बलले रोकिए त्यस्तो, क्षण नै हुन्छ नाजुक ।
त्यसले दिन्छ झन् धोका, अर्कोतर्फ भयानक ।।
१०३

बुझेर होशले चल्दा, विस्तारै क्रमले गरी ।
सबै यी काबुमा पर्छन्, बाघ हात्ती परेसरी ।।
१०४

अन्तस्करणमा पैल्हा, मनै जाग्दछ उठ्दछ ।
कर्म र ज्ञान हाँकेर, सहजै आफू उड्दछ ।।
१०५

ज्ञान इन्द्रिय रोजेर, मन लाग्दा त्यतातिर ।
त्यही इन्द्रियको काम, हुन्छ राम्रै पुरापुर ।।
१०६

कानले सुन्न चाहेमा, मन लाग्दा त्यतातिर ।
सुनेको त्यो कुरा अड्छ, पछिसम्म निरन्तर ।।
१०७

अरू इन्द्रिय त्यो बेला, निदाएसरी बस्दछन् ।
किनकि मनको साथ, नहुँदा अन्ध बन्दछन् ।।
१०८

मनको साथ लागेमा, पक्का बन्दछ काम त्यो ।
त्यस्तोमा बुद्धिले साथ, दिए उत्तम हुन्छ त्यो ।।

१०९

मनबुद्धि विना काम, जो हुन्छन् ती त व्यर्थ छन् ।
मनबुद्धि लगाएमै, काम सार्थक बन्दछन् ।।

११०

विवेक बुद्धिले गर्छ, नित्यानित्य निरूपण ।
मनले लिन्छ वैराग्य, ज्ञानको हुन्छ स्फुरण ।।

१११

यस्तै स्फुरणले गर्दा, मन बाँधेर बुद्धिले ।
मुमुक्षु हुन्छ उन्मुक्त, निस्पृह भइ युक्तिले ।।

११२

यही नै हो परंब्रम्ह, प्राप्तिको ज्ञान साधना ।
साधनासिद्ध त्यै ज्ञान, मुमुक्षु गर्छ चाहना ।।

११३

त्यस्तै गरी ठूला ज्ञानी, महात्माहरू अड्दछन् ।
इन्द्रियै पछि लाग्ने जो, त्याग्दै अस्तित्व गड्दछन् ।।

११४

शरीरधारी सिद्धात्मा, व्यवहार अलग्ग छ ।
जानिन्न तिनको कर्म, यही नै त विचित्र छ ।।
११५

इन्द्रियातीत ती हुन्छन्, छोडी विषय वासना ।
शमादि कर्मले हुन्छ, स्फटिक् झैं शुद्ध भावना ।।
११६

अन्तस्करणका चार, अरू ती दश इन्द्रिय ।
लगाम हातमा राखी, ज्ञानी गर्दछ तज्विज ।।
११७

भएर तत्त्वको ज्ञानी, काबुमा राखी इन्द्रिय ।
मुमुक्षु जगमा घुम्छ, गर्दै सम्पूर्णको जय ।।
११८

जयार्थ जनले त्यस्तो, मुमुक्षु ज्ञानीको जय ।
गर्दामा हुन्छ कल्याण, बोधले नित्य निर्भय ।।
११९

## (३) उपरति

प्र. उपरति का: ?

उ. प्रपञ्चेभ्य उपरमणम् ।

प्र. उपरति भनेको के हो ?
उ. आफ्नो स्वभावमा रही विषयबाट पन्छिनु हो ।

**ज्ञानदर्पण**

स्वधर्ममा भई मग्न, नित्य त्यो पालना गरोस् ।
राग द्वेषादि छाडेर, आत्म-चिन्तनमा रमोस् ।।
१२०

संसार विष सम्झेर, विषयी नबनीकन ।
सरक्क पन्छिई बस्नु, त्यो हो 'उपरति' धन ।।
१२१

## (४) तितिक्षा

प्र. तितिक्षा का ?
उ. शीतोष्णसुखदुःखादि द्वन्दसहिष्णुत्वम् ।
प्र. तितिक्षा भनेको के हो ?
उ. चिसो तातो र सुखदुःखादि दुवै कुरालाई समान सम्झनु नै 'तितिक्षा' हो ।

**ज्ञानदर्पण**

सुखदुःख, चिसोतातो, लाभहानी कुनै पनि ।
एकनास सबै देख्नु 'तितिक्षा' को भयो धनी ।।
१२२

## (५) श्रद्धा

प्र. श्रद्धा का ?

उ. गुरुवेदान्तवाक्येषु विश्वासः

प्र. श्रद्धा के हो ?

उ. गुरु र वेदान्त वाक्यमा (शास्त्रमा) विश्वास राख्नु नै 'श्रद्धा' हो ।

**ज्ञानदर्पण**

**गुरु हुन् ज्ञानका ज्योति, प्रमाण शास्त्र हो स्वतः ।**
**गुरु र शास्त्रमा 'श्रद्धा' राख्नु हो ज्ञानद्योतक ।।**

१२३

## (६) समाधान

प्र. समाधान किम् ?

उ. चित्तैकाग्रता ।

प्र. समाधान भनेको के हो ?

उ. चित्तको एकाग्रता (निःशंक) हुनु नै 'समाधान' हो ।

**ज्ञानदर्पण**

**चित्त एकाग्र भै बस्नु, 'समाधान' छ नाममा ।**
**यिनै हुन् ज्ञान सम्पत्ति, अध्यात्म परिवेशमा ।।**

१२४

साधनायुक्त जिज्ञासु, धारणा जुन गर्दछ ।
'शमादि नाम सम्पत्ति', यिनै हुन् जान्नु पर्दछ ।।
१२५

## घ. मुमुक्षुत्व

प्र. मुमुक्षुत्वं किम् ?
उ. मोक्षो मे भूयादिति दृढेच्छा ।
प्र. मुमुक्षुत्व भनेको के हो ?
उ. मेरो मोक्ष होओस् भनी बलियो इच्छा नै 'मुमुक्षुत्व' हो ।

**ज्ञानदर्पण**

पुनर्जन्म नहुँ भन्ने, जिज्ञासा जुन राख्दछ ।
'मुमुक्षु' उही हो पक्का, उसैले मोक्ष पाउँछ ।।
१२६

## तत्वविवेक

एतत्साधचतुष्टयम् । ततस्तत्त्वविवेकस्याधिकारिणो भवन्ति ।
प्र. तत्त्व विवेक कः ?
उ. आत्मा सत्यस्तदन्यत्सर्वं मिथ्येति ज्ञानमेव ।

यी मोक्षका चार साधन हुन् । यी सबै साधनहरू आफूमा भएपछि मोक्ष पाउनको लागि तत्त्व विचारको अधिकारी हुन्छ । अर्थात् - पञ्चमहाभूतादि देखे सुनेका सबै वस्तु बेग्लै र आत्मा (आफू) बेग्लै रहेछ भन्ने ज्ञान हुन्छ ।

प्र. तत्त्वविवेक भनेको के हो ?

उ. आत्मा सत्य छ, त्यसदेखि बाहेकका सबै चीज झुट्टा छन् भन्ने ज्ञान हुनुलाई 'तत्त्वविवेक' भन्दछन् ।

**ज्ञानदर्पण**

**यिनै साधन सम्पन्न, जो छ तत्त्वविवेकको ।**
**आधिकारिक त्यो आफैं, रम्छ भित्रै भई निको ।।**
**१२७**

**जति छन् पञ्चभूतादि, नासिने मासिने सबै ।**
**आत्मा छ भिन्न तीदेखि, भन्ने जान्नु छ नित्य नै ।।**
**१२८**

**आत्मा सत्य अरू मिथ्या, भन्ने तत्त्व विवेक हो ।**
**निरूपण यही गर्नु, तत्त्व-ज्ञान-प्रपञ्चको ।।**
**१२९**

# आत्मा

प्र. आत्मा कः ?

उ. (क) स्थूलसूक्ष्मकारणशरीराद् व्यतिरिक्तः

(ख) पञ्चकोशातीतः सन्

(ग) अवस्थात्रय साक्षी

(घ) सच्चिदानन्दस्वरूपः सन्

यस्तिष्ठति स आत्मा ।

प्र. आत्मा भनेको के हो ?

उ. यो आत्मा वा आफू (म) भन्ने कुरा-

(क) स्थूलशरीर, सूक्ष्मशरीर र कारणशरीरदेखि भिन्न रहेको,

(ख) अन्नमय, प्राणमय, मनोमय, विज्ञानमय र आनन्दमय नाम गरेका पञ्चकोशदेखि पर रहेको,

(ग) जाग्रत्, स्वप्न र सुषुप्ति गरी तिनै अवस्थाको साक्षी रूप भएको र

(घ) सत् चित् र आनन्द स्वरूप भएको जो छ त्यही नै 'आत्मा' हो ।

# आत्म-तालिका

सत् चित् आनन्द

(सच्चिदानन्दस्वरूपः सन्)

त्यो (ब्रह्म) तिमी हौ
(सामवेद)

जान्ने ब्रह्म हो
(ऋग्वेद)

स्वरूप → भएको → आत्मा

अवस्था → साक्षी → (अवस्थात्रय साक्षी) → आत्मा

कोश → भिन्न भएको (पञ्चकोशातीत सन्) → आत्मा

आत्मा ↔ भिन्न ↔ शरीर

अवस्था:

१. जाग्रत् अवस्थाको
२. स्वप्न अवस्थाको
३. सुषुप्ति अवस्थाको

शरीर:

१. स्थूल शरीर
२. सूक्ष्म शरीर
३. कारण शरीर

(स्थूलसूक्ष्मकारणशरीराद् व्यतिरिक्त)

कोश:

१. अन्नमय कोशले बनेको हुन्छ
२. प्राणमय कोशले बनेको हुन्छ
३. मनोमय कोशले बनेको हुन्छ
४. विज्ञापनमय कोशले बनेको हुन्छ
५. आनन्दमय कोशले बनेको हुन्छ

यो आत्मा ब्रह्म हो
(अथर्ववेद)

म ब्रह्म हुँ
(यजुर्वेद)

आत्मा वा आफू नै के हो ? खोज्दा पाइन्छ लक्षण ।
ती हुन् चार कुरा पैल्हे, गरौं तिन्को विवेचन ।।

१३०

शरीर तीन छन् भिन्न, स्थूल सूक्ष्म र कारण ।
ती तिनैदेखि जो भिन्न, आत्मा हो नित्य पावन ।।

१३१

अन्नादि कोश छन् पाँच, तीदेखि पनि भिन्न छ ।
जाग्रत् आदि अवस्थाको, ऊ साक्षी भई बस्दछ ।।

१३२

ऊ सदा सच्चिदानन्द, एकनास स्वरूपमा ।
नित्य शुद्ध भई बस्छ, अखण्डानन्द भावमा ।।

१३३

## शरीर

### क. स्थूल शरीर

प्र. स्थूल शरीर किं ?

उ. पञ्चीकृत पञ्चमहाभुतैः कृतं सत्कर्मजन्यं सुखदुःखादि भोगायतनं शरीरम् अस्ति जायते

वर्धते विपरिणमते अपक्षीयते विनश्यतीतिषड्विकारवदेतत् स्थूलशरीरम् ।

प्र. स्थूल (हाडमासुले बनेको) शरीर भनेको के हो (र कस्तो हुन्छ) ?

उ. पञ्चीकृत पञ्चमहाभूतले बनाइएको, सत्कर्मबाट जन्मेको, सुखदु:ख आदि भोग गर्ने, छ भन्नु, जन्मनु, बढ्नु, परिवर्तन हुनु, घट्नु, नाश हुनु यी ६ विकारले युक्त भएको शरीर नै 'स्थूल शरीर' हो ।

**ज्ञानदर्पण**

स्थूल शरीर के हो त्यो, के के छन् त्यसका गुण ?
कसरी भिन्न भो आत्मा ? बुझौं एकेक कारण ।
१३४

पञ्चीकृत गरी पञ्च-महाभूतहरू मिली ।
बनेको हाड मासुले, यो शरीर छ पावनी ।।
१३५

अनेकौं पशु जन्मादि, विताई जन्म यो हुनु ।
सत्मर्क भोगको लागि, जन्मेको देह संझनू ।।
१३६

जहाँ जे सुख दुःखादि, कर्मको फल जुर्दछ ।
सबैको भोग यो देह, गर्नै पर्दछ गर्दछ ।।
१३७

छ भन्ने भावले युक्त, जन्मन्छ अनि बढ्दछ ।
परिवर्तन भैरन्छ, घट्छ, मर्छ विकार छ ।।
१३८

यस्तो विकारले युक्त, स्थूल मानिन्छ देह यो ।
अविकारी छ आत्मा त्यो, यसैले भिन्न मानियो ।।
१३९

## ख. सूक्ष्म शरीर

प्र. सूक्ष्मशरीरं किं ?

उ. अपञ्चीकृत पञ्चमहाभूतैः कृतं, सत्कर्मजन्यं, सुखदुःखादि भोगसाधनं, पञ्चज्ञानेन्द्रियाणि पञ्चकर्मेन्द्रियाणि पञ्च प्राणादयो मनश्चैकं बुद्धिश्चैका एवं सप्तदशकलाभिः सह यस्तिष्ठति तत्सूक्ष्मशरीरम् ।

प्र. सूक्ष्म शरीर भनेको के हो ?

उ. अपञ्चीकृत पाँच महाभूतहरूबाट उत्पन्न भएको, 'सत्कर्मद्वारा बनेको, सुखदु:खको भोग गर्ने साधन भएको', पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच प्राण र मन बुद्धि गरी सत्र कलाले युक्त भएर जो रहन्छ त्यही नै 'सूक्ष्म शरीर' हो । (अर्थात् - आतिवाहिक वा लिङ्ग शरीर पनि यही हो)

**ज्ञानदर्पण**

स्थूल शरीर देखिन्छ, सूक्ष्म देखिन्न बाहिर ।
अनौठा यसको रूप, स्वप्नामा हुन्छ हाजिर ।।
१४०

आतिवाहिक वा लिङ्ग, शरीर नामले पनि ।
अपञ्चीकृत पाँचौटै, महाभूतहरू मिली ।।
१४१

सत्कर्मजन्य यो देह, सुखदुःखादि साधन ।
दश इन्द्रिय पाँचौटा, प्राण, बुद्धि अनि मन ।।
१४२

यी सत्र तत्त्वले सूक्ष्म, शरीर पूर्ण भैकन ।
स्वर्ग नर्क दुवै भोग्छ, यही हो कर्मको क्रम ।।
१४३

## पञ्च ज्ञानेन्द्रिय

प्र. पञ्च ज्ञनेन्द्रियाणि कानि ?

उ. श्रोत्रं त्वक्चक्षुः रसना घ्राणमिति पञ्च ज्ञानेन्द्रियाणि । श्रोत्रस्य दिग्देवता, त्वचो वायुः चक्षुषः सूर्यः, रसनाया वरूणः, घ्राणस्याश्विनाविति ज्ञानेन्द्रिय देवता ।
श्रोत्रस्य विषयः शब्दग्रहणम्
त्वचो विषयः स्पर्शग्रहणम्
चक्षुषो विषयः रूपग्रहणम्
रसानाया विषयो रसग्रहणम् ।
घ्राणस्य विषयो गन्धग्रहणम् इति ।।

प्र. पञ्च ज्ञानेन्द्रिय भनेका के हुन ?

उ. कान, छाला, आखाँ, जिब्रो र नाक यी पाँच ज्ञानेन्द्रिय (जान्ने इन्द्रिय) हुन् । कानको देवता दिशाहरू हुन्, त्यस्तै छालाको देवता वायु, आँखाको सूर्य, जिब्रोको बरूण र नाकको देवता अश्विनी कुमार हुन् । कानको विषय (काम) शब्द ग्रहण गर्नु अर्थात् सुन्नु हो । छालाको काम चिसो

तातो सारो गीलो थाहा पाउनु हो । आँखाको काम हेर्नु, जिब्रोको काम स्वाद थाहा पाउनु र नाकको काम गन्ध थाहा पाउनु हो ।

### ज्ञानदर्पण

कान, छाला, दुवै आखा, जिब्रो, नाक यी पाँच छन् ।
ज्ञानेन्द्रिय बनी स्पष्ट, जान्ने काम यी गर्दछन् ।।
१४४

दिक्, वायु, सूर्य, बरूण, अश्विनी देव पाँच छन् ।
ज्ञान-इन्द्रियका देव, कहिएर यी बस्दछन् ।।
१४५

शब्द सुन्नु, चिसोतातो जान्नु, रूप निहारनु ।
स्वाद गन्ध सबै जान्ने, ज्ञान-इन्द्रिय माननू ।।
१४६

**ज्ञानेन्द्रियको तालिका - १**

| क्र. सं. | अध्यात्म | अधिदैव | अधिभूत |
|---|---|---|---|
| | ज्ञानेन्द्रियको नाम | ज्ञानेन्द्रियको देवता | ज्ञानेन्द्रियको काम |
| १ | श्रोत्र - कान | दिशा | शब्द सुन्नु |
| २ | त्वचा - छाला | वायु | चिसो तातो जान्नु |
| ३ | चक्षु - आँखा | सूर्य | रातो सेतो रूप जान्नु |
| ४ | जिव्हा-जिब्रो | वरूण | छ प्रकारको रस जान्नु |
| ५ | घ्राण - नाक | आश्विनीकुमार | सुगन्ध दुर्गन्ध जान्नु |

# पञ्च कर्मेन्द्रिय

प्र. पञ्चकर्मेन्द्रियाणि कानि ?

उ. वाक्पाणिपादपायूपस्थानीति पञ्चकर्मेन्द्रियाणि । वाचो देवता वन्हि, हस्तयोरिन्द्र, पादयो विष्णुः, पायोर्मृत्युः, उपस्थस्य प्रजापतिरिति कर्मेन्द्रिय देवताः

वाचो विषयो भाषणम्, पाण्योर्विषयो वस्तु ग्रहणं, पादयोर्विषयो गमनम्, पायोर्विषयो मलत्यागः, उपस्थस्य विषय आनन्द, इति ।

प्र. पञ्चकर्मेन्द्रिय (काम गर्ने पाँच इन्द्रिय) भनेका कुन् कुन् हुन् ?

उ. बोली (वचन), हात, गोडा, गुदद्वार र लिङ्ग वा योनी यी पाँच कामगर्ने इन्द्रिय हुन् । वचनको देवता आगो, हातको इन्द्र, गोडाको विष्णु, गुदद्वारको यमराज र लिङ्ग वा योनीका देवता प्रजापति (बह्माजी) हुन् ।

बोलीको विषय कुराकानी गर्नु, हातको विषय वस्तुहरू लिनु दिनु, गोडाको हिंड्नु, गुदद्वारको मल त्याग गर्नु र लिङ्ग वा योनीको काम आनन्द लिनु हो ।

मुख हात दुवै गोडा, गुदद्वार सूचीन्द्रित ।
कर्म गर्ने यी पाँचौटा, भनिन्छन् कर्मइन्द्रिय ।।
१४७

आगो इन्द्र अनि विष्णु, यमराज प्रजापति ।
देवता क्रमले यी हुन्, गर्छन् काम यथास्थिति ।।

१४८
बोल्नु, लिनु दिनु, हिंडनु, दिसा गर्नु र सुखको ।
बोध गर्नु, क्रमैसाथ, पाँचै इन्द्रिय कर्मको ।।
१४९

## कर्मेन्द्रियको तालिका - २

| क्र. सं. | अध्यात्म | अधिदैव | अधिभूत |
|---|---|---|---|
| | कर्मेन्द्रियको नाम | कर्मेन्द्रियको देवता | कर्मेन्द्रियको काम |
| १ | वाक् - वाणी | अग्नि | बोल्नु |
| २ | पाणी - हात | इन्द्र | लिनु दिनु |
| ३ | पाद - गोडा | विष्णु | हिंड्नु |
| ४ | पायु - मलद्वार | यमराज | मल त्याग गर्नु |
| ५ | उपस्थ - लिङ्ग (योनी) | ब्रम्हा | विषय सुख गर्नु |

## ग. कारण शरीर

प्र. कारण शरीरं किं ?

उ. अनिर्वाच्यानाद्यविद्यारूपं शरीरद्वयस्य कारणमात्रं सत्स्वरूपाज्ञानं निर्विकल्परूपं यदस्ति तत्कारणशरीरम् ।

प्र. कारण शरीर भनेको के हो ?

उ. अनिर्वाच्य अर्थात् यस्तो छ भनेर भन्नै नसकिने, अनादि (जन्म नै नभएको) अविद्यारूप, स्थूल र सूक्ष्म दुवै शरीरको कारण भएको, सत्स्वरूप भएर पनि अज्ञान भनिएको, विकल्प रूपै नभएको, यस्तो जो छ त्यसैलाई कारण शरीर भन्दछन् ।

**ज्ञानदर्पण**

**अनिर्वाच्य अनादि यो, अविद्या रूपले गरी ।**
**स्थूल सूक्ष्म शरीरैको, मूल कारण हो भनी ।।**

१५०

**यो यस्तै हो भनी झट्ट, गर्न मिल्दैन निश्चय ।**
**आदिको ज्ञान नै छैन, कल्पनादेखि बाहिर ।।**

१५१

सत्यस्वरूप अज्ञान, निर्विकल्प भनिन्छ जो ।
शरीर त्यही हो कारण, ज्ञानले नाश हुन्छ त्यो ।।
१५२

## तीन अवस्था

प्र. अवस्थात्रयं किं ?
उ. जाग्रत्स्वप्नसुषुप्त्यावस्थाः

प्र. तीन अवस्था कुन् कुन् हुन् ?
उ. यी हुन् - जाग्रत्, स्वप्न र सुषुप्ति ।

**ज्ञानदर्पण**
अवस्था तीन छन् जाग्रत्, स्वप्ना सुषुप्ति भेदले,
केलाऔं तिनको गुण, एकेक गरी ज्ञानले ।।
१५३

## क. जाग्रत् अवस्था

प्र. जाग्रदवस्था का ?
उ. श्रोत्रादिज्ञानेन्द्रियैः शब्दादिविषयैश्च ज्ञायते इति यत्सा जाग्रदवस्था । स्थूलशरीराभिमानी आत्मा विश्व इत्युच्यते ।

प्र. जाग्रत् अवस्था भनेको के हो ?
उ. जुन अवस्थामा कान, छाला, आँखा, जिब्रो, नाक, आदि शब्द, स्पर्श, रूप, रस, गन्ध, आदिको थाहा हुन्छ त्यही अवस्था नै जाग्रत् अवस्था भनिन्छ । जाग्रत् अवस्थाको स्थूल शरीरलाई मेरो शरीर भनी साक्षी रूपले अभिमान गर्ने आत्मालाई विश्व भनिन्छ ।

**ज्ञानदर्पण**

**अवस्था कुन हो जाग्रद् ? कसरी त्यो छ जानिने ?**
**दश इन्द्रियको साथै, अन्तस्करण चारले ।।**
**१५४**

**चौध इन्द्रिय जागा भै, विषयादि बुझी लिने ।**
**त्यही जाग्रत् अवस्थाको, विश्व नै अभिमानी हो ।।**
**१५५**

## ख. स्वप्नावस्था

प्र. स्वप्नावस्था का ?
उ. जाग्रदवस्थायां यद्दृष्टं यच्छ्रुतं तज्जनितवासनया निद्रासमये यः प्रपञ्चः प्रतीयते सा स्वप्नावस्था सूक्ष्म शरीराभिमानी आत्मा तैजस् इत्युच्यते ।

प्र. स्वप्न अवस्था भनेको के हो ?

उ. जाग्रत् अवस्थामा जे देखिन्छ, जे सुनिन्छ, त्यसैको कारणले बनेको वासना नै निद्रा समयमा जे देखिन्छ, जे सुनिन्छ त्यही नै स्वप्न अवस्था हो ।

सूक्ष्म शरीरको अभिमान गर्ने आत्मालाई तैजस् भनिन्छ ।

**ज्ञानदर्पण**

जुन जाग्रत् अवस्थामा, जानिएका कुराहरू ।
वासना रूपले उस्तै, देखिने स्वप्न हो अरू ।।
१५६

यस्तो स्वप्न अवस्थामा, घुम्छ सूक्ष्म शरीरले ।
आत्माभिमानी तैजस् हो, तेजैले मात्र जानिने ।।
१५७

## ग. सुषुप्ति अवस्था

प्र. सुषुप्त्यवस्था का ?

उ. अहं किमपि न जानामि, सुखेन मया निद्राऽनुभूयत इति सुषुप्त्यवस्था ।

कारण शरीराऽभिमानी आत्मा प्राज्ञ इत्युच्यते ।

प्र. अब सुषुप्ति अवस्था भनेको के हो ?
उ. म केही पनि जान्दिन, आनन्दपूर्वक निद्राको अनुभव गरें तर अरू कुनै अत्तोपत्तो नै पाउन सकिन भन्ने अवस्थाको नाम नै सुषुप्ति हो । कारण शरीरको अभिमानी आत्मालाई प्राज्ञ भनिन्छ ।

**ज्ञानदर्पण**

**म केही पनि जान्दिन, निद्रा मात्र पर्‍यो खुब ।**
**मस्तले म निदाएछु, भन्छ पाएँ बडो सुख ।।**
**१५८**

**यस्तो बेला सुषुप्तिको, शरीर हुन्छ कारण ।**
**अभिमानी प्राज्ञ-नामा, आनन्द गर्छ धारण ।।**
**१५९**

## पञ्चकोश

प्र. **पञ्चकोशाः के ?**
उ. **अन्नमयः प्राणमयः मनोमयः विज्ञानमयः आनन्दमयश्चेति ।**

प्र. पाँच कोश (ढकनी) भनेका के के हुन् ?

उ. अन्नमय कोश, प्राणमय कोश, मनोमय कोश, विज्ञानमय कोश र आनन्दमय कोशलाई पाँच कोश भनिन्छ (यी सबै आत्माका ढकनी हुन्)

**ज्ञानदर्पण**

आत्माको कोश छन् पाँच, बाहिरी ढकनी सरी ।
अन्न प्राण मन विज्ञान्, आनन्द क्रमले गरी ।।

१६०

## क. अन्नमय कोश

प्र. अन्नमयः कोशः कः ?

उ. अन्नरसेनैवभूत्वा अन्नरसैनैव बृद्धिं प्राप्त अन्नरूप पृथीव्यां यद्विलीयते तदन्नमयः कोशः स्थूलशरीरम् ।

प्र. अन्नमय कोश भनेको के हो ?

उ. अन्नको रसबाट पैदा भएर अन्नकै रसले बढेर जो अन्न उत्पन्न गर्ने पृथ्वीमा मिल्दछ, त्यसैलाई अन्नमय कोश भन्दछन् । अन्नमय कोश भनेको स्थूल शरीर नै हो ।

**ज्ञानदर्पण**

शरीर हो अन्नमय, पहिलो कोश बाहिरी ।
अन्नैले जन्मिई बढ्छ, पृथ्वीमै मिल्छ यो मरी ।।

१६१

## ख. प्राणमय कोश

प्र. प्राणमयः कोशः कः ?

उ. प्राणादिपञ्चवायवो वागादीन्द्रियपञ्चकं प्राणमयः कोशः ।

प्र. प्राणमय कोश भनेको के हो ?

उ. प्राण, अपान, समान, व्यान र उदान नाम गरेका पाँच प्रकारका वायु अनि बोली, हात, गुदद्वार र लिङ्ग वा योनी पाँच कर्मेन्द्रिय मिलेर बनेकोलाई प्राणमय कोश भन्दछन् ।

**ज्ञानदर्पण**

**पाँचै प्राण र कर्मैका, पाँचै इन्द्रियले गरी ।**
**यो प्राणमय हो कोश, क्रियाशक्ति छ बेसरी ।।**

१६२

## ग. मनोमय कोश

प्र. मनोमयः कोश कः ?

उ. मनश्च ज्ञानेन्द्रिय पञ्चकं मिलित्वा यो भवति स मनोमयः कोशः

प्र. मनोमय कोश भनेको के हो ?

उ. मन र ज्ञानेन्द्रिय (कान, छाला, आँखा, जिब्रो र नाक) मिलेर बनेकोलाई मनोमय कोश भन्दछन्।

**ज्ञानदर्पण**

मनोमय कोश तेस्रो, मन ज्ञानेन्द्रियै मिली ।
बनेको यो छ सम्पूर्ण, इच्छाशक्ति सबै जुटी ।।
१६३

## घ. विज्ञानमय कोश

प्र. विज्ञानमयः कोशः कः ?

उ. बुद्धिर्ज्ञानेन्द्रियपञ्चकं मिलित्वा यो भवति स विज्ञानमयः कोशः ।

प्र. विज्ञानमय कोश भनेको के हो ?

उ. बुद्धि र ज्ञानेन्द्रिय (कान, छाला, आँखा, जिब्रो र नाक) मिलेर बनेकोलाई विज्ञानमय कोश भन्दछन् ।

**ज्ञानदर्पण**

विज्ञानमय हो कोश, चौथो बुद्धि र ज्ञानका ।
सबै इन्द्रियले गर्दा, कर्ता भोक्ता छ है ! सदा ।।
१६४

## ङ. आनन्दमय कोश

प्र. आनन्दमयः कोशः कः ?

उ. एवमेव कारण शरीरभूताविद्यास्थमलीनसत्वं प्रियादिवृत्तिसहितं सन् आनन्दमयः कोशः । एतत्कोशपञ्चकम् । मदीयं शरीरं, मदीयाः प्राणाः मदीयं मनश्च, मदीया बुद्धिर्मदीयं ज्ञानमिति स्वेनैव ज्ञायते । तद्यथा मदीयत्वेन ज्ञातं कटककुण्डलगृहादिकं स्वस्माद्भिन्नं तथा पञ्चकोशादिकं मदीयत्वेन ज्ञातमात्मा न भवति ।

प्र. आनन्दमय कोश भनेको के हो ?

उ. कारण शरीर रूप आविद्या रहने तमोगुण र रजोगुणले दवाइएको प्रियादि (प्रिय, मोद र प्रमोद) वृत्तिले सहित भएको मलिन सत्व प्रधान जो छ त्यही नै आनन्दमय कोश हो ।

यसरी कोश पाँचौटा छन्

'मेरो शरीर, मेरा प्राणहरू, मेरो मन, मेरो बुद्धि, मेरो ज्ञान' भन्ने कुरा आफैंले नै जानिन्छ । यसरी नै मेरो भनेर जानिएका बाला, कुण्डल, घर आदि आफूदेखि भिन्न छन् । त्यस्तै मेरो भनेर जानिएका पञ्च कोशहरू पनि आत्मा होइनन् ।

(किनभने पञ्चकोशहरू आत्मादेखि भिन्न छन्
र आत्मा साक्षी स्वरूप मात्र हो ।

**ज्ञानदर्पण**

आनन्दमय हो पाँचौं, कोश अन्तिम मानिने ।
अविद्याले गरी सत्व, मलीन भइ ढाकने ।

१६५

प्रिय, मोद, प्रमोदादि, वृत्तिले व्यक्त भैकन ।
आनन्दी भावले रम्ने, पाप पुण्य लिईकन ।।

१६६

पाँचौटा कोशको भित्र, एकेक ढाकिईकन ।
बसेरै पनि त्यो आत्मा, लिप्त छैन कुनैसँग ।।

१६७

'म' भन्ने आत्मवस्तु त्यो, स्थूल सूक्ष्म दुवै रूप ।
लिई बस्दछ त्यो छुट्टै, मेरोदेखि अलग्ग छ ।।

१६८

मेरो शरीर औ प्राण, मन, बुद्धि र ज्ञान हो ।
घरवार र सम्पत्ति, परिवार सबै छ जो ।।

१६९

देखिने भेटिने बस्तु, होलान् मेरा परन्तु त्यो ।
मेरो होइन है आत्मा, पाँचै कोश छ दूर त्यो ।

१७०

## सच्चिदानन्द

प्र. आत्मा तर्हि कः ?

उ. सच्चिदानन्दस्वरूपः ।

प्र. त्यसो हो भने आत्मा कस्तो छ ?
(अर्थात् 'म' कस्तो छु ?)

उ. सत् (सदा रहिरहने) चित् (ज्ञान स्वरूप) आनन्द (सुख स्वरूपको छ ।
(अर्थात 'म' भन्ने वस्तु सदा भावयुक्त, चेतन र सुख स्वरूपको छ)

**ज्ञानदर्पण**

अनि हो के त त्यो आत्मा ? कसरी जानिइन्छ त्यो ?
सच्चिदानन्द त्यो आत्मा, अगम्य ब्रह्म मात्र हो ।।

१७१

## क. सत्

प्र. सत् किंम ?

उ. कालत्रयेऽपि तिष्ठतीति सत् ।

प्र. सत् भनेको के हो ?

उ. तिनै काल (भूत, भविष्यत् र वर्तमान) मा जो रहिरहन्छ अर्थात् नाश हुँदैन त्यही नै सत् हो ।

**ज्ञानदर्पण**

**तिनै काल ननाशिई, नित्य एक रसात्मक ।**
**आत्मा मात्र छ सत् वस्तु, अनादि र अनन्त छ ।।**
**१७२**

## ख. चित्

प्र. चित् किम् ?

उ. ज्ञान स्वरूपः

प्र. चित् भनेको के हो ?

उ. सम्पूर्ण कुराको ज्ञान (ज्योति) स्वरूप हो ।

**ज्ञानदर्पण**

**चित् स्वरूप छ आत्मा त्यो, सर्वज्ञ छ ऊ विस्तृत ।**
**तेजको पनि त्यो तेज, जागा ब्रह्माण्ड व्यापक ।।**
**१७३**

## ग. आनन्द

प्र. आनन्द कः ?

सुख रूपः

उ. एवं सच्चिदानन्दस्वरूपं स्वात्मानं विजानीयात् ।

प्र. आनन्द भनेको के हो ?

उ. सुख स्वरूप हो (अर्थात् दुःखदेखि रहित सदा आनन्द रूप) । यस्तै प्रकारबाट आफ्नो सच्चिदानन्द स्वरूपलाई जान्नु पर्दछ ।

**ज्ञानदर्पण**

आत्मा हो सुखको रूप, निरन्तर अनामय ।।
दुःखको नाम नै छैन, अहा ! अक्षुण्य वैभव ।।
१७४

म हुँ नित्य सदा मोक्ष, शक्तिवान् म छु दुर्जय ।
अविनाशी म सर्वज्ञ, निर्लिप्त म छु निस्पृह ।।
१७५

तिनै काल सदा अड्ने, सुख ज्योति स्वरूप हुँ ।
अलिङ्गी सच्चिदानन्दी, आत्मा त्यो ब्रह्म मात्र हुँ ।।
१७६

म हुँ सुख सधैं रम्ने, जाग्रत् स्वप्न सुषुप्तिको ।
म साक्षी सच्चिदानन्द, निर्विकल्प स्वरूपको ।।
१७७

जानेर यो कुरा नित्य, भई पाप विमोचन ।
मोक्षको भागी त्यो व्यक्ति, भवको काट्छ बन्धन ।।
१७८

## चौबीस तत्त्व

अथ चतुर्विंशतितत्त्वोत्पत्तिप्रकारं वक्ष्यामः ।

अब चौबीस तत्त्व उत्पन्न भएको उत्पत्ति प्रकारको वर्णन गरिन्छ (गर्दछौं)

ज्ञानदर्पण

वेदान्ती गर्दछन् व्याख्या, तत्त्व चौबीस छन् भनी ।
कसरी ती भए पैदा ? बनौं ज्ञाता गनीगनी ।।
१७९

ब्रह्माश्रया सत्वरजस्तमोगुणात्मिका माया अस्ति । ततः आकाशः सम्भूतः, आकाशाद्वायुः, वायोस्तेजः, तेजस आपः, अद्भ्य पृथ्वी ।

परब्रह्म परमात्माको आश्रयमा सत्व गुण, रजोगुण र तमोगुण रूपी माया छ । अर्थात् ब्रह्मबाट मायाको सृष्टि भयो । मायाबाट आकाश उत्पन्न भयो, आकाशबाट वायु, वायुबाट तेज, तेजबाट जल र जलबाट पृथ्वी उत्पन्न भयो ।

**ज्ञानदर्पण**

**ब्रह्म आश्रित भै माया, त्रिगुणात्मक जन्म भो ।**
**आकाश वायु र तेज, जल पृथ्वी हुँदै गयो ।**

**१८०**

**एतेषां पञ्चतत्त्वानां मध्ये आकाशस्य सात्विकांशाच्छ्रोत्रेन्द्रियं सम्भूतम् । वायोः सात्विकांशात्त्वगिन्द्रियं सम्भूतम् । अग्नेः सात्त्विकांशाच्चक्षुरिन्द्रियं सम्भूतम् । जलस्य सात्त्विकांशाद्रसनेन्द्रियं सम्भूतम् । पृथीव्याः सात्विकांशात् घ्राणेन्द्रियं सम्भूतम् । एतेषां पञ्चतत्वानां समष्टि सात्त्विकांशान्मनोबुद्धयहंकारचित्तान्तः करणानि संभूतानि ।**

यी पाँच तत्वहरूमध्येमा-
आकाशको सत्वगुणको अंशबाट कानको इन्द्रिय उत्पन्न भयो
वायुको सत्वगुणको अंशबाट छालाको इन्द्रिय उत्पन्न भयो ।
अग्निको सत्वगुणको अंशबाट आँखाको इन्द्रिय उत्पन्न भयो ।

जलको सत्वगुणको अंशबाट जिब्रोको इन्द्रिय उत्पन्न भयो । पृथ्वीको सत्वगुणको अंशबाट नाकको इन्द्रिय उत्पन्न भयो ।

यी पञ्चतत्त्वहरूको समष्टि सत्वगुणको अंशबाट मन, बुद्धि, अहंकार र चित्त नामका अन्तकरण उत्पन्न भए ।

**ज्ञानदर्पण**

मूल प्रकृति हो माया, अविद्या आद्य शक्ति हो ।
तीनैबाट भयो पैदा, क्रमैले पञ्चभूतको ।।
१८१

पाँच तत्त्व यिनै मध्ये, सत्व अंश अकाशको
वायु, अग्नि, जल, पृथ्वी समष्टि सब तत्त्वको ।।
१८२

मन, बुद्धि, अहंकार, चित्त यी चार लक्षण ।
अन्तस्करण जानिन्छन्, देखिन्नन् भित्र बाहिर ।।
१८३

भई संरचना यस्ता, इन्द्रिय चार जातका
पछाडि क्रमले कान, छाला, नेत्र भए खडा ।।
१८४

जिब्रो नाक भए पैदा, सत्व अंश भएर नै ।
महाभूत ती पाँचौटा, एकेक सबको हुँदै ।।
१८५

संकल्पविकल्पात्मकं मन
निश्चयात्मिका बुद्धिः
अहंकर्ता अहंकारः
चिन्तन कर्तृ चित्तम्
मनसो देवता चन्द्रमाः
बुद्धेर्ब्रह्मा
चित्तस्य वासुदेवः
अहंकारस्य रुद्रः।

मनले यो काम गरूँ कि नगरूँ भनी शंका गर्दछ यो कुरा यस्तै हो भनी बुद्धिले ठहर गर्दछ । यो काम कसरी गरूँ भनी चित्तले चिन्तन गर्छ । अहंकारले यो कर्ता भोक्ता मै हुँ भनी गर्व गर्दछ ।

मनको देवता चन्द्रमा हुन्, बुद्धिको देवता ब्रह्मा, चित्तको देवता वासुदेव हुन् र अहंकारको देवता रूद्र ।

ज्ञानदर्पण

मनले कल्पना गर्छ, बुद्धि गर्छ निरूपण ।
मै हुँ भन्छ अहंकार, चित्त गर्दछ चिन्तन ।।
१८६

## २४ तत्त्वको तालिका - ३

| क्र. सं. | पञ्चमहाभूत | ज्ञानेन्द्रिय | कर्मेन्द्रिय | पञ्चवायु | अन्तस्करण |
|---|---|---|---|---|---|
| १ | आकाश | कान | वाणी (बोली) | उदान | - |
| २ | वायु | छाला | हात | प्राण | मन |
| ३ | तेज | आँखा | गोडा | समान | बुद्धि |
| ४ | जल | जिब्रो | मुत्रेन्द्रिय | व्यान | चित्त |
| ५ | पृथ्वी | नाक | मलेन्द्रिय | अपान | अहंकार |

मनका देवता चन्द्र, ब्रह्माजी बुद्धि-देवता ।
हुन् अहंकारका रुद्र, चित्तका वासुदेव ता ।।
१८७

## अन्तस्करणको तालिका - ४

| क्र. सं. | अध्यात्म | अधिदैव | अधिभूत |
|---|---|---|---|
| | अन्तस्करणको नाम | अन्तस्करणको देवता | अन्तस्करणको काम |
| १ | अन्तस्करण | विष्णु | स्फूरण हुनु |
| २ | मन | चन्द्रमा | संकल्प विकल्प गर्नु |
| ३ | बुद्धि | ब्रम्हा | निश्चय गर्नु |
| ४ | चित्त | नारायण | चिन्तन गर्नु |
| ५ | अहङ्कार | रूद्र | अभिमान गर्नु |

एतेषां पञ्चतत्त्वानां मध्ये-
आकाशस्य राजसांशात् वागिन्द्रियं सम्भूतम्
वायोः राजसांशात् पाणीन्द्रियं सम्भूतम्
बन्हेः राजसांशात् पादेन्द्रियं सम्भूतम्
जलस्य राजसांशात् उपस्थेन्द्रियं सम्भूतम्
पृथीव्या राजसांशात् गुदेन्द्रियं सम्भूतम्
एतेषां समष्टि राजसांशात् पञ्च प्राणाः सम्भूताः ।

यिनै पञ्चतत्त्वमध्ये-
आकाशको रजोगुणको अंशबाट वचनको इन्द्रिय उत्पन्न भयो
वायुको रजोगुणको अंशबाट हातको इन्द्रिय उत्पन्न भयो ।
तेजको रजोगुणको अंशबाट गोडाको इन्द्रिय उत्पन्न भयो ।
जलको रजोगुणको अंशबाट लिङ्ग वा योनी इन्द्रिय उत्पन्न भयो ।
पृथिवीको रजोगुणको अंशबाट गुदद्वार इन्द्रिय उत्पन्न भयो ।
अनि यिनै पञ्चतत्वका समष्टि रजोगुणको अंशबाट पञ्च प्राणहरू उत्पन्न भए । ती हुन् - प्राण, अपान, व्यान, समान र उदान ।

**ज्ञानदर्पण**

**पञ्च तत्त्व यिनैबाट, राजशी अंश छुट्टिई ।**
**भए कर्मेन्द्रिय पैदा, एकेक क्रमले गरी ।।**

१८८

मुख हात पाउ सूची, गुदेन्द्रिय भएपछि ।
समष्टि अंशले जंमा, पञ्च प्राण बनेर ती ।।
१८९

छातीमा प्राणको स्थान, गुदेन्द्रिय अपानको ।
समान बस्छ नाभीमा, उदान कण्ठको भयो ।।
१९०

ब्यानले ढाक्छ सर्वाङ्ग, यसरी प्राण व्याप्त भै ।
उपप्राण भए पैदा, प्राणकै बीचबाट नै ।।
१९१

ती नाग, कुर्म, कृकल, देवदत्त, धनञ्जय ।
बसेर गर्दछन् काम, बेग्लाबेग्लै लिई घर ।।
१९२

बमन् गराउँछ नागैले, कुर्म आँखा चलाउँछ ।
जगाई भोक कृकल, अर्को हाई गराउँछ ।।
१९३

त्यो देवदत्त भन् अर्को, धनञ्जय भुलाउँछ ।
प्राणन्तसम्म तातो भै, मूर्धालाई फुलाउँछ ।।
१९४

एतेषां पञ्चतत्त्वानां तामसांशात् पञ्चीकृतपञ्चतत्त्वानि भवन्ति ।

यी सम्पूर्ण पञ्चतत्वहरूको तामस अंशबाट पञ्चीकरण भएका पञ्चमहाभूतहरू उत्पन्न हुन्छन् ।

यसरी पाँच महाभूत, पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच प्राण र मन, बुद्धि, चित्त र अहंकार समेत गरी चौबीस तत्त्वहरू हुन्छन् ।

**ज्ञानदर्पण**

**तामसी अंशले गर्दा, यी पञ्चतत्त्वबाट नै ।**
**पञ्चीकृत पञ्चतत्त्व, भए पैदा सरासरै ।।**
**१९५**

**यसरी चौबीसै तत्त्व, भई प्रकट विश्वमा ।**
**चराचर बन्यो सारा, सारांश कहियो यहाँ ।।**
**१९६**

## पञ्चीकरण

प्र. पञ्चीकरणं कथमिति चेत् ?

उ. एतेषां पञ्चमहाभूतानां तामसांशस्वरूपमेकैकं भूतं द्विधा विभज्य एकमेकमर्धं पृथक् तूष्णीं व्यवस्थाप्यापरमपरमर्धं चतुर्धा विभज्य स्वार्धं मध्येष्वर्धेषु स्वभागचतुष्टयं संयोजनं

कार्य तदा पञ्चीकरणं भवति ।
एतेभ्यः पञ्चीकृतपञ्चमहाभूतेभ्यः स्थूल शरीरं भवति ।
एवं पिण्डब्रह्माण्डयोरैक्यं सम्भूतम् ।

प्र. पञ्चीकरण कसरी हुन्छ ?

उ. यिनै पञ्चमहाभूतको तमोगुणको अंशबाट भएका पृथ्वी, जल, वायु र आकाशको आधा भागलाई अलग राखी बाँकी अर्को आधा भागको ४ भाग लगाउनु र पृथ्वीको आधा भागहरू महाभूतहरूको ४ भाग मध्येको १/१ भाग जोडी दिनु पञ्चीकरण हुन्छ। त्यसै गरी जलको आधा भागमा अरूको ४ भाग मध्येको १/१ भाग, त्यस्तै तेजको, वायुको र आकाशको पञ्चीकरण गरेपछि अनि स्थूल शरीर बन्दछ (अर्थात् सम्बन्धित महाभूतको आधा भाग र अरू ४ महाभूतको आधाको चौथाई भाग जोड्दा त्यो महाभूतको पूर्ण पञ्चीकरण हुन्छ) जसरी पिण्ड (स्थूल शरीर) बनेको छ, त्यसैगरी ब्रह्माण्ड पनि बनेको छ । अतः पिण्ड र ब्रह्माण्डमा समानता छ। फरक छैन ।

पञ्चीकरण के हो त्यो ? कसरी बन्न सक्दछ ?
तामसी अंश पाँचैको, एकैनास हिसाब छ ।

१९७

यी पाँच तत्त्व केलाई, एकेक अधियाँ गरी ।
सरक्क राखी त्यो आधा, अर्को चार चिरा चिरी ।।

१९८

पृथ्वीतत्त्व भई पैलो, आधा आफ्नै छ भाग जो ।
अरू तत्त्वहरूबाट, चिरा एकेक जो मिल्यो ।।

१९९

त्यसैले पूर्ण ती तत्त्व, सबै हुन्छन् बराबर ।
प्रत्येकको गरी आठ, भाग आधा गरी पर ।।

२००

चार भाग अरू तत्त्व, सबैलाई पुऱ्याउँदा ।
प्रत्येक तत्त्वको भाग, आठ हुन्छन् पुरापुर ।।

२०१

जल, तेज, अनि वायु, आकाश त्यही रूपले
पूर्णता सबमा मिल्छ, भागांश थप्नु झिक्नुले ।।

२०२

पञ्चीकरण भैसक्दा, मिश्रित हुन्छ तत्त्वको ।
आधा अंश भई आफ्नै, आधा त अरू चारको ॥

२०३

यसै कारणले गर्दा, चराचर सबै कुरा ।
आ-आफ्नै अंश गुणले, सबै तत्त्व हुने पुरा ॥

२०४

पञ्चीकरणद्वारा नै, शरीर स्थूल बन्दछ ।
यही पिण्ड सरी पूर्ण, ब्रह्माण्ड मान्नु पर्दछ ॥

२०५

## पंच भूतात्मक पंचीकरण विधिको तालिका - ५

(प्रत्येक भूतको पूर्ण रूपमा ८ भाग मानिन्छ भने आफ्नो ४ भाग र अरू ४ भूतको १।१ भाग गरी ८ भाग पुरा गरिन्छ ।

| पंच महाभूत | आकाश | वायु | तेज | जल | पृथ्वी | भूतात्मक चिन्ह | पूर्णाङ्क तथा चिन्ह | |
|---|---|---|---|---|---|---|---|---|
| आकाश | ४ | १ | १ | १ | १ | ⊙ | ८ | ⊙ ○△▽□ |
| वायु | १ | ४ | १ | १ | १ | ○ | ८ | ○ ⊙△▽□ |
| तेज | १ | १ | ४ | १ | १ | △ | ८ | △ ⊙○▽□ |
| जल | १ | १ | १ | ४ | १ | ▽ | ८ | ▽ ⊙○△□ |
| पृथ्वी | १ | १ | १ | १ | ४ | □ | ८ | □ ⊙○△▽ |

# जीव

स्थूलशरीराभिमानी जीवनामकं ब्रह्मप्रतिबिम्बं भवति, स एव जीवः

प्रकृत्या स्वस्मादीश्वरभिन्नत्वेन जानाति ।

अविद्योपाधि सन् आत्मा जीव इत्युच्यते ।।

स्थूल शरीरको अभिमान गर्ने (म नै शरीर हुँ भन्ने) ब्रह्मको प्रतिबिम्बलाई (छायाँ) जीव भन्दछन् । मायाको वशले गर्दा त्यही जीव 'म ईश्वरदेखि भिन्न छु' भन्ने ठान्दछ । अविद्याको सम्बन्धले गर्दा आत्मालाई नै जीव भनिन्छ ।

(प्रकृतिमा सत्वगुण प्रधान भए माया हुन्छ, तमोगुण प्रधान भए अविद्या भनिन्छ)

**ज्ञानदर्पण**

स्थूल शरीरधारी यो, अभिमानी 'म' बन्दछ ।
ब्रह्मको देखिने छायाँ, स्पष्ट हो जान्नु पर्दछ ।।
२०६

आत्मा हो जीवको रूप, जीवात्मा नामले तर ।
'म' भन्ने तत्त्व त्यै नै हो, छैन त्यो भिन्न ईश्वर ।।
२०७

ऐनामा जीव देखे झैं, पिण्डको आत्म आफू हो ।
बिम्ब त्यो ब्रह्मको छायाँ, ब्रह्माण्डैबाट पाइयो ।।
२०८

ऐनामा देखिंदा आफ्नो, अनुहार दुवैतिर ।
दुवै जना भए जस्तै, जीव ब्रह्म ठहर्दछ ।।
२०९

नजान्दा देखिने दोटा, ऐनालाई हटाउँदा ।
हुने त्यो एउटै मात्र ब्रह्म अद्वैत हो सदा ।।
२१०

जसरी पिण्ड ब्रह्माण्ड, एउटै जब बन्दछ ।
त्यसैगरी जीव ब्रह्म, एउटै जान्नु पर्दछ ।।
२११

घटाकाश महाकाश भेद, भो खवटा बिच ।
घडा फुट्दा हट्यो, भेद स्पष्ट आकाश एक छ ।।
२११ (क)

## ईश्वर

मायोपाधि सन् ईश्वर इच्युच्यते । एवमुपाधिभेदाज्जीवेश्वर भेददृष्टिर्यावत्पर्यन्तं तिष्ठति तावत्पर्यन्तं जन्ममरणादिरूप-संसारो न निवर्तते । तस्मात्कारणात् न जीवेश्वरयोर्भेदबुद्धिः स्वीकार्या ।

मायामा ब्रह्मको प्रतिबिम्ब पर्दा त्यो प्रतिबिम्बलाई ईश्वर भन्दछन् । यसै गरी उपाधिको भेदले जीव र ईश्वरको भेद दृष्टि जहाँसम्म रहन्छ, त्यहाँसम्म जन्ममरणरूप यो संसार हट्दैन (रहिरहन्छ) । त्यसैकारणले जीव र ईश्वरको भेद छ भन्ने कुरा मान्नु हुँदैन ।

**ज्ञानदर्पण**

मायावश अविद्याले, भ्रमैमात्र गरी सदा ।
जीव ईश्वर वा ब्रह्म, छुट्टाछुट्टै गराउँदा ।।
२१२

अभिमान लिई कर्ता, भोक्ता मै हुँ भनीकन ।
जीव नै विषयी बन्छ, यथार्थ ढाकिईकन ।।
२१३

मायाले छेकिई जीव, भ्रमले द्वैतमा भुली ।
जन्म मरणको चक्कर, काट्दै जान्छ लखौं जुनी ।।
२१४

त्यसैले भेदको भाव, छोडि तत्काल निश्चय ।
गरी अद्वैत विश्वास, मोक्षमार्ग गरौं दृढ ।।
२१५

## तत्त्वमसि

ननु साहंकारस्य किञ्चिज्ज्ञस्य जीवस्य निरहंकारस्य सर्वज्ञेश्वरस्य तत्त्वमसि महावाक्यात्कथमभेदबुद्धिःस्यादुभयोर्विरूद्धधर्माक्रान्तत्वात्

थोरै मात्र जान्ने भएको जीव जो अहंकारले युक्त छ सो र सर्वज्ञ ईश्वर जो अहंकारले रहित छ यी दुवैलाई 'तत्त्वमसि' भन्ने महावाक्यले कसरी एकै हुन् भन्नु ? विरूद्ध धर्म अर्थात् भिन्न धर्मले युक्त भएको हुनाले जीव र ईश्वर एकै हुनै सक्दैन ।

**ज्ञानदर्पण**

अहंकार सदा युक्त, जीवलाई कसोगरी ?
अहंकार सदा मुक्त, ईशलाई उही भनी
२१६

प्रसंग के गरी मिल्छ ? गर्नु कस्तो निरूपण ?
शंका यस्तो हुँदा साथ, गर्नै पर्छ विवेचन ।।
२१७

अहो 'तत्त्वमसि' वाक्य, कहाँ मिल्छ विधर्मीमा ?
रूप लक्षण भिन्नै भै, एकता हुन्न विश्वमा ।।
२१८

**इति चेन्न-**

**स्थूलसूक्ष्मशरीराभिमानी त्वम्पदवाच्यार्थः उपाधिविनिर्मुक्तं समाधिदशासम्पन्नं शुद्धं चैतन्यं त्वम्पदलक्ष्यार्थः ।**

त्यसो नभन-

स्थूल शरीर र सूक्ष्म शरीर मेरै हो भन्ने अभिमानी 'त्वं' पदले जानिने जीवको वाच्यर्थ हो । उपाधिले रहित समाधि दशामा पुगेको शुद्ध चैतन्य 'त्वं' यो पदको लक्ष्यार्थ हो ।

(यौटा पदको वाच्यर्थ र लक्ष्यार्थ गरी दुई अर्थ हुन पनि सक्छ । जस्तो :- औंठी भन्दा गहना र सुन, घडा भन्दा गाग्रो र माटो भने जस्तै हो)

त्यसैले

स्थूल सूक्ष्म शरीरी त्यो, 'त्वं' जीव वाच्य अर्थ हो ।
उपाधि मुक्त चैतन्य, 'त्वं' हो लक्ष्यार्थ शुद्ध त्यो ।।
२१९

उही शब्द दुई अर्थ, कसरी बन्न सक्दछ ?
जसरी 'घट' ले घैंटो, भनेर पनि मट्टी छ ।।
२२०

औंठी यार्लिङ जे भन्छौं, आखिर सुन मात्र हो ।
त्यस्तै उपाधिले युक्त, अनि मुक्त उपाधिको ।।
२२१

वाच्य अर्थ र लक्ष्यार्थ, दुइटै भेद गर्दछ ।
कार्य कारणले गर्दा, यौटै हो भन्नु पर्दछ ।।
२२२

एवं सर्वज्ञत्वादिविशिष्टईश्वरस्तत्पदवाच्यार्थः उपाधि शून्यं शुद्धचैतन्यं तत्पदलक्ष्यार्थः एवं च जीवेश्वरयोऽचैतन्यरूपेणाऽभेदे बाधकाभावः

यस्तै गरी 'तत्' पदले विशिष्ट सर्वज्ञ ईश्वर भन्ने वाच्यार्थ गर्छ भने उपाधिले शून्य चैतन्य रूपको त्यही ईश्वर 'तत्' पदको लक्ष्यार्थ हुन्छ ।

यस्तै गरी जीव र ईश्वरमा शुद्ध चैतन्यको रूपलाई लिंदा दुवैको भेद रहदैन । एकरूप (एकता) रहन जान्छ ।
(यसैगरी जीव र ईश्वरको अभेद 'एकत्व' पुष्टि हुन्छ)

**ज्ञानदर्पण**

बोलीले जे कुरा भन्छ, लक्ष्य अर्कै गरेर त्यो ।
भावले बुझ्नु नै पर्छ, नत्र बित्यासमा पर्‍यो ।।
२२३

दही कुकुरले खाला, हेर होश गरेर नै !
भने कुकुरको मात्रै, रखवारी गरिन्न है !!
२२४

बिरालो काक वा कुकुर, अरू त्यस्तै अनेक जो।
पशु वा पंक्षि आएर, नखाऊन् खास अर्थ हो ।।
२२५

बोलीले राडी वा पाखी, जे भनोस् लख हैन त्यो ।
लख हो ऊनको मात्रै, तात्पर्य जीव ब्रह्म हो ।।
२२६

त्यस्तै हो लक्षण 'तत्'को, सर्वज्ञ सर्वशक्तिमान् ।
निरूपाधिक चिन्मात्र, त्यही 'तत्' मात्र हो महान् ।।
२२७

बोलीले 'तत्' भनेतापि, सर्वज्ञ सर्वशक्तिमान् ।
उपाधिमुक्त चिन्मात्र, त्यही 'तत्' मात्र हो महान् ।।
२२८

यही प्रकारले हेरे, के हो 'तत्त्वमसि' भनी ।
विवेकी बुझ्छ सहजै, 'जीव ब्रह्म' बिनीबिनी ।।
२२९

त्यस्तै विशिष्ट सर्वज्ञ, ईश्वर 'तत्' हुँदा पनि ।
यहाँ उपाधिले पूर्ण, वाच्य अर्थ बने पछि ।।
२३०

त्यस्तै उपाधिले शून्य, त्यही ईश्वर 'तत्' हुँदा ।
लक्ष्यार्थ भेदले अर्कै, देखियो तर घोरिंदा ।।
२३१

उपाधिलाई फ्याँकेमा, यौटै बन्दछ आखिर ।
माटो सुन भने जस्तै, चैतन्यजन्य ईश्वर ।।
२३२

उपाधि पूर्णमा जीव, ईश्वर भेद देखियो ।
उपाधि शून्यमा दौटै, पूर्णब्रह्म उही त हो ।।
२३३

अहो ! 'तत्त्वमसि' वाक्य, उपाधि भेद छोडदा ।
एकता बोध भैहाल्छ, जीव ईश्वरको सदा ।।
२३४

वेदान्त भित्रको गाँठो, त्यही हो द्वैत भावको ।
जब अद्वैतता खुल्छ, भव-बन्धन पार भो ।।
२३५

## जीवन्मुक्त

एवं च वेदान्तवाक्यैः सद्गुरूपदेशेन च सर्वेष्वपि भूतेषु येषां ब्रह्मबुद्धिरूत्पन्ना ते जीवन्मूक्ता इत्यर्थः

यस्ता प्रकारले जो व्यक्तिमा 'तत्वमसि' आदि वेदान्त वाक्यहरूबाट र सद्गुरूका उपदेशले सबै प्राणी मात्रमा ब्रह्म देख्ने बुद्धि उत्पन्न हुन्छ, त्यस्ता व्यक्तिहरूलाई जीवन्मुक्त भन्नु पर्दछ ।

यिनै 'तत्वमसि' या त, 'अहं ब्रह्मास्मि' वाक्यको ।
बुझेमा गूढ तत्वार्थ, जीवन्मुक्त यथार्थ भो ।
२३६

यस्तै हिसाबले गर्दा, गुरु वेदान्त वाक्यको ।
श्रद्धा राखेर विश्वास, गरेमा दृढ हुन्छ त्यो ।।
२३७

यही ब्रह्मात्म बुद्धिले, केलाई सब प्राणीको ।
जीवको एकता गर्दा, खुल्नेछ द्वार मुक्तिको ।।
२३८

प्र. ननु: जीवन्मुक्त कः ?

उ. यथा देहोऽहं पुरुषोऽहं, ब्राह्मणोऽहं शूद्रोऽहमस्मीति दृढनिश्चयस्तथा नाहं ब्राह्मणो, न शुद्रो, न पुरुषः किन्त्वसङ्ग, सच्चिदानन्दरूपः, स्वप्रकाशः, सर्वान्तर्यामी, चिदाकाशरूपोऽस्मीति दृढनिश्चयरूपापरोक्षज्ञानवान् जीवन्मुक्तः ।

प्र. जीवन्मुक्तको लक्षण के हो ?

उ. 'म शरीर हुँ, म पुरुष हुँ, म ब्राह्मण हुँ, म शूद्र हुँ', भने जस्तै म ब्राह्मण होइन, शूद्र होइन,

पुरुष होइन, भनेर जसले दृढ निश्चय गर्छ र म कसैको संगत गर्ने होइन, म केवल तिनै काल रहने सत् मात्र हुँ, चेतन मात्र हुँ, आनन्द रूप मात्र हुँ, स्वयं प्रकाश रूप हुँ, सबैको अन्तरात्मामा रहने हुँ, चैतन्य आकाशस्वरूप हुँ भन्ने दृढ निश्चयात्मक अपरोक्ष ज्ञानले युक्त जो छ त्यही मानिस जीवन्मुक्त मानिन्छ।
(अर्थात् शरीर छँदाछँदै मुक्त भएको मानिन्छ)

**ज्ञानदर्पण**

**कुन लक्षणले गर्दा, जीवन्मुक्त भनिन्छ को ?**
**कसरी हुन्छ त्यो बोध ? महात्मा सशरीरको ?**

**२३९**

**म शरीर, म यो जाति, भने जस्तै गरी दृढ ।**
**म हैन देह या जाति, असंगी गरी निश्चय ।।**

**२४०**

**सच्चिदानन्द मात्रै हुँ, स्वप्रकाशी चिन्दात्मक ।**
**भन्ने जो दृढता गर्छ, जीवन्मुक्त त्यही नर ।।**

**२४१**

समता बुद्धिले आफू, भई निस्पृह निर्मम ।
रहेमा मिल्छ त्यो लक्ष्य, मुमुक्षुको यथाक्रम ।।
२४२

जीवन्मुक्त उही हुन्छ, विश्वमा भाग्यवान् उही ।
वासनामुक्त भै शुद्ध, चेतनारूप हो उही ।।
२४३

कामना बाँकी नै हुन्न, रोकिन्छ कल्पना सबै ।
षड्‌रिपु स्वतः मारिन्छन्, कालको ख्याल हुन्न क्यै ।।
२४४

आत्मज्ञानी महायोद्धा, विश्वको विजयी उही ।
सच्चिदानन्द निस्संगी, ब्रह्मज्ञानी स्वयं उही ।।
२४५

## अपरोक्ष ज्ञान

प्र. अपरोक्ष ज्ञानं किं ?

उ. ब्रह्मैवाहमस्मीत्यपरोक्ष ज्ञानेन निखिल कर्मबन्ध विनिर्मुक्तःस्यात् ।

प्र. अपरोक्ष ज्ञान भनेको के हो ?

उ. म नै सच्चिदानन्द व्यापक स्वरूप ब्रह्म हुँ भन्ने यस्तो दृढ निश्चयले जसले सम्पूर्ण कर्मबन्धनलाई काट्दछ, त्यही ज्ञानलाई अपरोक्ष ज्ञान भनिन्छ ।
(म पनि ब्रह्म रहेछु भन्नु परोक्ष ज्ञान हो)

**ज्ञानदर्पण**

**अपरोक्ष भनी जान्नु, कसरी के भई गुण ?**
**शंका उठेमा त्यो पक्का, हुन्छ है निम्न कारण ।।**
**२४६**

**परोक्ष ज्ञानले मुक्त, कर्मबन्धन बाहिर ।**
**म ब्रह्म, मोक्ष हुँ भन्ने, भावमा हुन्छ जो नर ।।**
**२४७**

**जाति पाति कुनै लिङ्ग, भेदभाव रहन्न क्यै ।**
**मानापमानमा तुल्य, एकछत्त हुने सबै ।।**
**२४८**

**सर्वान्तर्यामी त्यो कत्ति, अभिमानविना रही ।**
**नित्यमुक्त स्वयंबोध, निरहंकारी हो उही ।।**
**२४९**

# कर्म

प्र. कर्माणि कति विधानि सन्ति ?

उ. आगामीसञ्चितप्रारब्धभेदेन त्रिविधानि सन्ति ।

प्र. कर्महरू कति प्रकारका छन् ।

उ. आगामी, सञ्चित र प्रारब्ध भेदले कर्महरू तीन प्रकारका छन् ।

**ज्ञानदर्पण**

कर्मजन्य छ संसार, कर्मका भेद छन् कति ?
प्रश्न यस्ता स्वयं उठ्छन्, गरौं चर्चा यथामति ।।
२५०

कर्मका भेद छन् तीन, आगामी अनि संचित ।
प्रारब्ध नामधारी छन्, हुन्छ व्याख्या यथार्थतः ।।
२५१

# आगामी कर्म

प्र. आगामी कर्म किं ?

उ. ज्ञानोत्पत्यन्तरं ज्ञानिदेहकृतं पुण्यपापरूपं कर्म यदस्ति तदागामीत्यभिधीयते ।

प्र. आगामी कर्म भनेको के हो ?

उ. 'म ब्रह्मै हुँ' भन्ने दृढतायुक्त ज्ञान भैसकेपछि त्यस्ता ज्ञानीका शरीरले गरेको पाप पुण्यरूप जुन कर्म छ त्यसलाई आगामी कर्म भन्दछन् ।

**ज्ञानदर्पण**

**ज्ञानोपरान्तको कर्म, आगामी त्यो ठहर्दछ ।**
**पापपुण्य जति हुन्छ, ज्ञानी त्योबाट मुक्त छ ।।**
**२५२**

## सञ्चित कर्म

**प्र. सञ्चित कर्म किं ?**

**उ. अनन्तकोटिजन्मनां वीजभूतं सत् यत्कर्मजातं पूर्वार्जितं यत् तिष्ठति तत्सञ्चितं ज्ञेयम् ।**

प्र. संचित कर्म भनेको के हो ?

उ. कोटीयौं जन्मको वीज भएको, कोटीयौं जन्मदेखि जंमा भएको जुन कर्म छ त्यही नै संचित् कर्म हो ।

देहीले जे जति गर्छ, कर्मको संचिती हुँदै
प्रत्येक जन्मको साथ, पछि लाग्दछ धाउँदै ।।
२५३

कोटियौं जन्मका कार्य, पापपुण्य ती जे त हुन् ।
जम्मा भएर थुप्रेका, तिनै संचित कर्म हुन् ।
२५४

कोटियौं जन्मदेखिको, पापपुण्य सबै जुटी ।
सबै भोग्दछ अज्ञानी, ज्ञानी बस्छ सबै भुटी ।।
२५५

## प्रारब्ध कर्म

प्र. प्रारब्धकर्म किं ?

उ. इदं शरीरमुत्पाद्य इह लोके सुखदुःखादिप्रदं यत्कर्म तत्प्रारब्धं भोगेन नष्टं भवति । प्रारब्धकर्माणां भोगादेव क्षय इति ।

प्र. प्रारब्ध कर्म भनेको के हो ?

उ. यो स्थूल शरीर खडा गराएर यस लोकमा सुखदु:ख दिने जुन कर्म छ त्यो प्रारब्ध कर्म हो । त्यो भोग गरेर मात्र नाश हुन्छ ।

(अर्थात् ज्ञान नहुँदा सम्मको यो शरीरले जे जति कर्म गर्दछ, त्यो भोग गरेरै मात्र नाश हुन्छ)

**ज्ञानदर्पण**

त्यस्तै कर्म छ प्रारब्ध, यही जन्ममहाँ हुने ।
पापपुण्य जति हुन्छन्, भोगेरै नाश ती हुने ।।
२५६

नभोगी नाश त्यो हुन्न, संचित बन्छ नत्र ता ।
ज्ञानले मात्र रोकिन्छ, भोग्नै पर्दछ नत्र ता ।।
२५७

यसरी कर्मको भेद, जहाँ जस्तो भएपनि
ज्ञानी हुन्छ सदा मुक्त, कुनैले छुन्न कैं पनि ।।
२५८

संचितं कर्म ब्रह्मैवाहमिति निश्चयात्मकज्ञानेन नश्यति आगामी कर्मापि ज्ञानेन नश्यति । किञ्च आगामी कर्मणां नलीनीदलगतजलवत् ज्ञानीनां सम्बन्धो नास्ति ।

'म ब्रह्मै हुँ' भन्ने दृढ निश्चयात्मक ज्ञानले संचित कर्मको नाश हुन्छ । आगामी कर्म पनि ज्ञान भएपछि नाश हुन्छ । किनभने कमलको पातमा रहेको

पानीको उक्त पातसँग सम्बन्ध नरहेजस्तै ज्ञानी मानिसको पनि आगामी कर्मसँग सम्बन्ध रहँदैन ।

ज्ञानदर्पण

'ब्रह्मै म हुँ' भनी पक्का, ज्ञानको दीप जल्दछ ।
संचित कर्म साराको, नाश तत्काल गर्दछ ।।

२५९

आगामी कर्ममा संग, ज्ञानीको नहुने हुँदा ।
ज्ञानी बन्दछ निर्लिप्त, कर्कलापानी झैं सदा ।।

२६०

किञ्च ये ज्ञानिनं स्तुवन्ति भजन्ति अर्चयन्ति तान्प्रति ज्ञानीकृतमागामी पुण्यं गच्छति । ये ज्ञानिनं निन्दन्ति द्विषन्ति दुःखप्रदानं कुर्वन्ति तान्प्रति ज्ञानिकृतं सर्वमागामी क्रियमाणं यदा वाच्यं कर्म पापात्मकं तद् गच्छति ।

किनकि, ज्ञानी महात्माको स्तुति, सेवा, पूजा जसले गर्दछ त्यस्ता मानिसमा ज्ञानी महात्माले गरेका आगामी कर्मको सम्पूर्ण पुण्य जान्छ । यस्तै गरी जुन मानिसले ज्ञानी महात्मालाई निन्दा गर्छ, द्वेष गर्छ, दुःख दिन्छ, त्यस्ता मानिसलाई ज्ञानी महात्माले गरेको आगामी कर्मको संपूर्ण पाप लाग्दछ ।

**ज्ञानदर्पण**

ज्ञानीका पछि लागेर, सेवा गर्ने सबै जन ।
पुण्य त्यो बाँड्दछन्, बाँकी, पाप निन्दकको धन ।।

२६१

ज्ञानी हुन्छ सदा मुक्त, पाप पुण्य नलीकन ।
कर्कलापानी झैं बस्छ, सदा निर्मल भैकन ।।

२६२

## आत्मज्ञानी

तथा चात्मवित् संसारं तीर्त्वा ब्रह्मानन्दमिहैव प्राप्नोति तरति शोकमात्मविदिति श्रुतेः ।

त्यसकारण आत्मा जानेको मानिसले (आत्मज्ञानी) संसाररूपी सागरलाई तरेर यहीं नै ब्रह्मानन्द पाउँछ । 'आत्मज्ञानीले शोक गर्नु पर्दैन, दुःखबाट पार पाउँदछन्' भन्ने कुरा श्रुतिले पनि भन्दछ ।

**ज्ञानदर्पण**

त्यसैले आत्मज्ञानी यो, संसार सहजै तरी ।
ब्रह्मानन्दी भई बस्छ, यही जन्मविषे रमी ।

२६३

शोक दुःख सबै छाडी, अति आनन्द लीकन ।
आफैं भित्र भई मुग्ध, ज्ञानी हुन्छ निरञ्जन ।।

२६४

तनुं त्यजतु वा काश्यां, श्वपचस्य गृहेऽथवा ।
ज्ञानसम्प्राप्तिसमये, मुक्तोऽसौ विगताशयः इति स्मृतेश्च ।

ज्ञान प्राप्ति भैसकेको व्यक्ति (ज्ञानी) को वासना क्षय भैसकेको हुँदा ऊ काशीमा मरोस् वा चाण्डालको घरमा, ऊ मुक्त नै हुन्छ । यो कुरा स्मृतिमा पनि छ ।

**ज्ञानदर्पण**

शीतोष्ण सुखदुःखादि, नराखी ख्याल क्यै कुरा ।
फलाशा नलिई बस्ने, हुन्छन् ज्ञानी पुरापुरा ।।

२६५

कुनै भेद परीपञ्च, नराखी ब्रह्ममा सदा ।
रमाई बोधले युक्त, ज्ञानी मुक्त छ सर्वदा ।।

२६६

किनकि ज्ञानी मुक्तैछ, पाप पुण्य सबै छुटी ।
ऊ हुन्छ स्वच्छ औ शान्त, रहन्न वासना भुटी ।।
२६७

जहाँ होस् ज्ञानीको मृत्यु पोडेको घर आँगन ।
अथवा काशीमा होओस्, मुक्तै छ छैन है ! भ्रम ।
२६८

त्यसैले ज्ञानीको मृत्यु, जहाँ होस् घर घाटमा ।
कुनै दोष कतै हुन्न, ऊ मुक्तै छ यथार्थमा ।।
२६९

## तत्त्वबोध प्रकरणं समाप्तम्

तत्त्वको ज्ञान दिने वेदान्तको पहिलो खुड्किलो यहीं सकिन्छ ।

## सात्विकादि ३ गुणा अनुसारको भाग तालिका - ६

| पञ्चमहाभूत | सात्विक गुणबाट | | राजस गुणबाट | | तामसगुणबाट |
|---|---|---|---|---|---|
| | अन्तस्करण | ज्ञानेन्द्रिय | कर्मेन्द्रिय | पञ्चप्राण | पञ्चविषय |
| आकाश | अन्तस्करण | कान | वाणी (बोली) | उदान | शब्द |
| वायु | मन | छाला | हात | प्राण | स्पर्श |
| तेज | बुद्धि | आँखा | गोडा | समान | रूप |
| जल | चित्त | जिब्रो | मुत्रेन्द्रिय | व्यान | रस |
| पृथ्वी | अहंकार | नाक | मलेन्द्रिय | अपान | गन्ध |

## स्थूल शरीरमा पञ्चमहाभूतको परस्परमा पञ्चीकरण गरेपछिको तत्त्व तालिका -७

| पंचीकृत भूतादि | पृथ्वी | जल | तेज | वायु | आकाश |
|---|---|---|---|---|---|
| पृथ्वी | हाड | मासु | नाडी | छाला | रौं |
| जल | रगत | वीर्य | मूत्र | पसिना | राल (थुक) कफ |
| तेज | भोक | प्यास | आलस्य | मैथुन | निद्रा |
| वायु | खुंचिनु | हिंड्नु | उठ्नु | दौड्नु | पसारनु |
| आकाश | भय | मोह | क्रोध | काम | शोक |
| अन्तस्करण | अहंकार | चित्त | बुद्धि | मन | अन्तस्करण |

## आकाशादि पंच महाभूतको विशेष तालिका - ८

| | आकाश | वायु | तेज | जल | पृथ्वी |
|---|---|---|---|---|---|
| सृष्टिक्रम | → बाट | → बाट | → बाट | → बाट | → बाट |
| परिमाण | थोरै | → १० गुना सानो थोरै | → १० गुना सानो थोरै | → १० गुना सानो थोरै | → १० गुना सानो थोरै |
| वर्ण | कालो | हरियो | रातो | सेतो | पहेंलो |
| तन्मात्रा | शब्द | स्पर्श | रूप | रस | गन्ध |
| देवता | शिव | देवी | सूर्य | विष्णु | गणेश |
| शरीरमा स्थान | शिर | पेट | पित्त | निधार | मलेन्द्रिय |
| शरीरमा (विशेष स्थान इन्द्रिय) | कान | छाला | आँखा | जिव्रो | नाक |
| कहाँ के छ ? | शब्द मात्र छ | शब्द स्पर्श छ | शब्द स्पर्श रूप छ | शब्द स्पर्श रूप रस छ | शब्द स्पर्श रूप रस गन्ध छ |
| यान्त्रिक रूप | ● | ○ | △ | ▽ | □ |



## व्याख्याकार

नाम : विष्णुगोपाल रिसाल ।

जन्म : वि.सं. १९९१, पौष कृष्ण सप्तमी

जन्मस्थान : सैंवू (भैसिपाटी), ललितपुर, नेपाल ।

हालको ठेगाना : क ४/७९ विष्णुकुटी, जाउलाखेल
ललितपुर, नेपाल

टेलिफोन नं. : ५-५३८४११

शिक्षा : एम.एम. (नेपाली)

तालिम : प्रशासनका विभिन्न पक्षहरू, ट्रान्स्पोर्ट पलिसी एण्ड प्लानिङ्ग, सिभल एभिएसन एड्मिनिष्ट्रेसन, इरिगेसन वाटर म्यानेज्मेन्ट, आर्थिक योजना र सञ्चारका पक्षहरु

अनुभव : सचिव, लोकसेवा आयोग, श्री ५ को सरकारका विभिन्न संस्थानहरूको सञ्चालक र पदपूर्ति समितिको सदस्य भै काम गरेको ।

कृति : प्रश्नोपदेश, तीनधाम यात्रा (यात्रा संस्मरण), भावनका लहर-१ (कविता संगालो), नेपाली भाषा र व्याकरणको संयुक्त लेखक तथा पत्रपत्रिकामा विभिन्न लेखहरूको प्रकाशन ।

सामाजिक तथा धार्मिक सेवा:

अध्यक्ष, सत्सग परिवार, जाउलाखेल-४, ललितपुर;
सदस्य, विश्वहिन्दु महासंघ काठमाडौं;
आजीवन सदस्य, नेपाल राष्ट्रिय समिति, विश्वहिन्दु महासंघ काठमा...
आजीवन सदस्य, विकास सेवा समूह नेपाल, काठमाडौं;
आजीवन सदस्य, सेवा निवृत्त कर्मचारी सेवा परिषद्, काठमाडौं, नेपा...
सचिव जागृत वादविवाद तथा सहित्य मण्डल काठमाडौं (२०१४-२०...)

भ्रमण : विश्वका केही प्रमुख मुलुकहरू

रुची : विश्व समाचार र आध्यात्मिक दर्शन